॥ श्रीः ॥

# रावणकृतं उड्डीशतन्त्रम्
# (रावण-सदाशिव सम्वादात्मक)



सङ्कलन एवं नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा

## दुई शब्द

तन्त्रशास्त्रको ज्ञान मसँग अत्यन्त कम छ । मानव शरीरको रोग र उपचारसँग केन्द्रित भएर शास्त्रका कुरा खोतल्दै जाँदा अनायाश यो उड्डीशतन्त्रका केही श्लोक अनुवादका लागि तानिन पुगे । यही क्रममा यो लघु ग्रन्थ अनुवाद हुन पुग्यो र यहाँहरूलाई उपलब्ध गराउन सकेँ । अर्थात् यो एउटा भगवान्‌का कृपाले अनायाश भावानुवाद हुन पुगेको पहिलो तन्त्रशास्त्र हो ।

अनुवादका क्रममा एकपछि अर्को गर्दै करिब आधा दर्जन उड्‌डीश तन्त्रका ग्रन्थ सामाजिक सञ्जालबाट डाउनलोड गरी यो ग्रन्थलाई सरल बनाउन प्रयत्न गरेँ । लंकाका राजा रावणबाट लेखिएको भनिएको यो ग्रन्थको हरेक प्रतिमा भिन्नता पाइयो । तैपनि मूलतः निम्नलिखित तीन ग्रन्थलाई आधार बनाएर यो भावानुवाद गरिएको हो ।

(क) श्री : रावणकृतम् उड्डीश तन्त्रम्, पं.रामेश्वर दत्त कृतं भाषा टीका सहितम्, सन् १९८५ ।
(ख) श्रीः रावण कृत उड्डीश तन्त्र भाषा टीका सहित, टीकाकार-पं.रामबिहारी मिश्र ।
(ग) असली प्राचीन रावण संहिता, दोश्रो परिच्छेद, (रावण सदाशिव सम्वादात्मक), आचार्य पं.शिवकान्त झा, वि.सं.२०६६ ।

उड्डीशतन्त्र शिवउड्डीश, भैरवउड्डीश, रावणउड्डीश र मेघनादउड्डीश गरी चार किसिमका रहेछन् । भगवान् शिवले दत्तात्रेयलाई दिएको तन्त्र उपदेशलाई शिवउड्डीश वा दत्तात्रेयतन्त्र भनिन्छ । भैरवले बताएको तन्त्रशास्त्रलाई भैरवउड्डीश भनिन्छ । भगवान् शिवले पार्वतीलाई बताएको तन्त्रशास्त्रलाई रावणले आफ्नो शैलीमा लेखे, यसलाई रावणउड्डीश भनिन्छ । मेघनादले बताएको तन्त्रशास्त्रलाई मेघनाद उड्डीश भनिन्छ । यो रावण कृत उड्डीश तन्त्रमा कुल दश पटल छन् । उनका एक एक मुखले एक एक पटल वर्णन गरेका थिए भनिन्छ । रावणले लेखेको उड्डीशतन्त्र पनि शिव-पार्वती संवादात्मक र अर्को एउटा छुट्टै भेटियो ।



आधुनिक युगका अधकल्चा ज्ञानले तन्त्रशास्त्रको महत्ता के मा र कसरी जोख्ने भन्ने समेत औकात राख्दैन । तर पनि यो ग्रन्थ अंग्रेजी लगायतका विभिन्न भाषामा अनुवाद भएको र उल्लेखनीय प्रति बिकेको पाइयो । कलियुगमा तन्त्रको साधना र सदुपयोग अति नै कम हुन्छ । यसैले पनि यो ग्रन्थ विवादमा परिरहने गर्दछ ।

मानव स्वास्थ्यसँग सम्बन्धित विविध कुराहरु विषयगतरूपमा समेट्न यथासम्भव प्रयाश गरिरहेछु त्यसैले यही नामका अन्य ग्रन्थलाई आफ्नो उद्देश्यभन्दा बाहिर गएर अनुवाद गर्न सकिएन । त्रुटी जति सबै क्षम्य होऊन्, पाठकवर्गमा यति मात्र अनुरोध गर्न चाहेँ । सानो पुस्तक भएकोले (?) विषयसूची समेत राखिन माफी चाहन्छु ।

मिति : २०८०।०२।०३, अमेरिका, पोर्टल्याण्ड बसाइको क्रममा । **sapkotamps731@gmail.com**

## प्रथमः पटलः
(पहिलो भाग)

### ग्रन्थावतरणिका
(ग्रन्थको सृजना)

**कैलाशशिखरे रम्ये नानारत्नोपशोभिते ।**
**नानाद्रुमलताकीर्णे नानापक्षिरवैर्युते ॥१॥**

(त्रेतायुगमा वा कुनै बेला) सुन्दर, अनेक थरी रत्नहरूले सुशोभित, अनेक प्रकारका रूख र लहराले ढाकिएको, थरीथरीका चराहरूको मिठो स्वर निस्किरहेको,...।

**सर्वर्तुकुसुमामोदमोदिते सुमनोहरे ।**[१]
**शैत्यसौगन्ध्यमान्द्याढ्यैर्मरुद्भिरुपवीजिते ॥२॥**

सबै ऋतुहरू अनेक थरी फूलहरूले गर्दा सुगन्धित भइरहेको, अत्यन्त मनोहर, फूलको बास्नाको भार बोकी शीतल र सुगन्धी मन्द हावा चलिरहेको, ...।

**अप्सरागणसङ्गीत**[२] **कलध्वनि निनादिते ।**
**स्थिरच्छायाद्रुमच्छायाच्छादिते स्निग्धमञ्जुले ॥३॥**

अप्सरागणको कर्णप्रीय मधुर सङ्गीत गुञ्जिरहेको, वृक्षका अटल वा स्थिर, घना र सुखदायी छाया परिरहेको; ...।

**मत्तकोकिलसन्दोहसङ्घुष्टविपिनान्तरे ।**
**सर्वदा स्वगणैः सार्धमृतुराजनिषेविते ॥४॥**[३]

मदोन्मत्त कोइलीका अनेक समूह वनभित्र छिरेर कराइरहेको, ऋतुहरूका राजा वसन्तले आफ्ना सेवकसहित भई सधैँ निवास गरिरहेको, ...

---

१.ख पुस्तकमा-सर्वर्तुः कुसुमामोदं मोदिते सुमनोहरे । २. ख पुतकमा- अप्सरो गणसंगीत । ३. ख पुस्तकमा-मत्तकोकिलसन्दोह सङ्घुष्टविपिनान्तरे । सर्वदा स्वगणैः सार्धं ऋतुराजनिषेविते ॥

**सिद्धचारणगन्धर्वगाणपत्यगणैर्वृते ।[१]**
**तत्र मौनधरं देवं चराचरजगद्गुरुम् ॥५॥**

सिद्ध, चारण, गन्धर्व तथा आफ्ना सेना सहित गणेश र कुमार सधैं बसोबास गर्ने, यस्तो मनोरम एवं सुखदायी कैलाश पर्वतको (त्यस्तो) शिखरमा संसारी चराचर जीवका गुरु भगवान् श्रीशिव मौनधारण गरी निवास गर्नु हुन्थ्यो ।

**सदाशिवं सदानन्दं करुणाऽमृतसागरम् ।**
**कर्पूरकुन्दधवलं शुद्धसत्वमयं विभुम् ॥६॥**

सधैं कल्याण गर्नुहुने, सधैं आनन्दमा रहने, करुणाका रूप, अमृतका सागरजस्तै पवित्र र शुद्ध स्वरूपका, कपूर र कुन्दपुष्प जस्तै उज्याला (सेता) रङका, पवित्र, सत्वगुणी, व्यापक,...।

**दिगम्बरं दीनानाथं योगीन्द्रं योगिवल्लभम् ।**
**गङ्गाशीकरसंसिक्तं जटामण्डलमण्डितम् ॥७॥**



दिसा नै वस्त्र भएका, दीनदुःखीका मालिक, योगीहरूमा श्रेष्ठ, योगीहरूका प्रिय, गङ्गाबाट निस्केका पानीका धाराले सधैं जटा भिजिरहने, ...।

**विभूतिभूषितं शान्तं व्यालमालं कपालिनम् ।**
**त्रिलोचनं त्रिलोकेशं त्रिशूलवरधारिणम् ॥८॥**

शरीरमा विभूति लगाएका, शान्त स्वभावका, घाँटीमा सर्पको तथा मुण्डको माला लगाएका, तीन आँखा भएका, तीन वटै लोकका मालिक, त्रिशूल र वरमुद्रा धारण गरेका, ...।

**आशुतोषं ज्ञानमयं कैवल्यफलदायकम् ।**
**अनाद्यन्तं[२] निर्विकल्पं निर्विशेषं निरञ्जनम् ॥९॥**

---

१. ख पुस्तकमा-सिद्धचारणगन्धर्वैगाणपत्यगणैर्वृते । २. ख पुस्तकमा-निरान्तकं ।

चाँडै प्रसन्न हुने, ज्ञानका स्वरूप, मोक्ष दाता, प्रारम्भ र अन्त नभएका; दैहिक, दैविक र भौतिक गरी तीन वटै ताप नभएका वा कल्पनाभन्दा बाहिरका, विशेष नभएका, आकार नभएका,... ।

**सर्वेषां हितकर्तारं देवदेवं निरामयम् ।**
**अर्द्धचन्द्रोज्वलद्भालं पञ्चवक्त्रं सुभूषितम् ॥१०॥**

सबैलाई कल्याण गर्ने, देवताका पनि देवता, कुनै किसिमको जन्म र मृत्यु नभएका वा कुनैपनि रोग नभएका, निधारमा चन्द्रमालाई धारण गर्ने, पाँच मुख भएका र आभूषणले सुसज्जित...।

**प्रसन्नवदनं वीक्ष्य लोकानां हितकाम्यया ।**
**विनयेन समायुक्तो रावणः शिवमब्रवीत् ॥११॥**

यस्ता भगवान् शिवलाई खुशी भएर बसिरहेको देखी संसारको भलो चाहने रावणले विनम्रतापूर्वक प्रार्थना गर्दै यी प्रश्न सोधे-।



**रावण उवाच**

**नमस्ते देव देवेश सदाशिव जगद्गुरो ।**
**तन्त्रविद्यां क्षणं सिद्धिः कथयस्व मम प्रभो ॥१२॥**

रावण भन्दछन्-हे देव ! हे देवताका देवता ! हे सदा कल्याण प्रदान गर्ने ! हे संसारका गुरु ! म हजुरलाई नमस्कार गर्दछु । हे प्रभू ! तत्काल सिद्ध हुने तन्त्र विद्याका बारेमा मलाई उपदेश दिनु हवस् ।

**शिव उवाच**

**साधु पृष्टं त्वया वत्स लोकानां हितकाम्यया ।**
**उड्डीशाख्यमिदं तन्त्रं कथयामि तवाग्रतः ॥१३॥**

शिव भन्नुहुन्छ-हे पुत्र ! संसारको हितका लागि तिमीले धेरै राम्रो कुरा सोधेका छौ, तिमीलाई सन्तुष्ट पार्ने एवं चाँडै सफलता प्रदान गर्ने सबै तन्त्रको सार उड्डीश नामक तन्त्र म तिमीलाई बताउँदछु, सावधान भई सुन ।

**पुस्तके लिखिता विद्या नैव सिद्धिप्रदा नृणाम् ।**
**गुरुं विनापि शास्त्रेऽस्मिन्नाधिकारः कथञ्चन ॥१४॥**

कसैलाई गुरु नथापी किताबमा लेखिएको तन्त्रविद्या आफैँले पढेका भरमा मानिसलाई कहिल्यै सिद्धि प्राप्त हुँदैन ।

**अथाभिध्यास्य[1] शास्त्रेऽस्मिन्सम्यक्षट्कर्मलक्षणम् ।**
**तन्त्रमन्त्रानुसारेण प्रयोगफलसिद्धिदम् ॥१५॥**

यस शास्त्रमा पहिले तन्त्रमन्त्र अनुसार सिद्ध हुने मारण, मोहन, उच्चाटन, विद्वेषण, आकर्षण आदि छ कर्मका लक्षण वर्णन गर्दछु ।

षट्कर्माणि (छ कर्म)

**शान्तिवश्यस्तम्भनानि विद्वेषोच्चाटनं तथा ।**
**मारणं तानि शंसन्ति षट्कर्माणि मनीषिणः ॥१६॥**



शान्तिकर्म, वशीकरण, स्तम्भन, विद्वेषण, उच्चाटन र मारण : यी छ कर्मलाई पण्डितजन षट्कर्म भन्दछन् ।

षट्कर्म लक्षणम् (छ कर्मका लक्षणहरू)

**रोगकृत्या गृहादीनां निराशः शान्तिरीरिता ।**
**वश्यं जनानां सर्वेषां विधेयत्वमुदीरितम् ॥१७॥**
**प्रवृत्तिरोधः सर्वेषां स्तम्भनं समुदाहृतम् ।**
**स्निग्धानां द्वेषजननं[2] मिथो विद्वेषणं मतम् ॥१८॥**
**उच्चाटनं स्वदेशादेर्भ्रंशनं परिकीर्तितम् ।**
**प्राणिनां प्राणहरणं मारणं समुदाहृतम् ॥१९॥**

---

१. ख पुस्तकमा-अथाभिध्यास्ये । २. ख पुस्तकमा-द्वेषभावं ।

जसको प्रयोगले रोग र घरको उपद्रो शान्त हुन्छ त्यसलाई **शान्तिकर्म** भनिन्छ । जसको प्रयोग गर्नाले राजा, शत्रु वा पाउन मुश्किल स्त्री आफ्ना वशमा हुन्छन् त्यसलाई **वशीकरण** भनिन्छ । जसको प्रयोग गर्नाले जल, अग्नि, शत्रुका सेना आदि रोकिन्छन् त्यसलाई **स्तम्भन** भनिन्छ । जसको प्रयोग गर्नाले एकआपसको प्रेम बिथोलिन्छ त्यसलाई **विद्वेषण** भनिन्छ । जसको प्रयोग गर्नाले मानिस आफ्नो पहिलेको स्थान छाडी भाग्दछ त्यसलाई **उच्चाटन** भनिन्छ । जसको प्रयोगले मानिसको मृत्यु हुन्छ त्यसलाई **मारण** भनिन्छ ।

**ग्रन्थविषयकथनम् (ग्रन्थमा रहेका विषयवस्तु)**

**ग्रन्थेऽस्मिन् कर्षणं चादौ द्वितीयोन्मादनं तथा ।**
**विद्वेषणं तृतीये च चतुर्थोच्चाटनं तथा ॥२०॥**
**ग्रामस्योच्चाटनं पञ्च जलस्तम्भश्च षष्ठकम् ।**
**स्तम्भनं सप्तकं चैव वाजीकरणमष्टमम् ॥२१॥**
**अन्यानपि प्रयोगांश्च बहून् शृण्वसुराधिप ।**
**अन्धीभावो मूकभावो गात्रसङ्कोचनं तथा ॥२२॥**



हे राक्षसराज रावण ! यो ग्रन्थको पहिलो प्रकरणमा आकर्षण, दोश्रोमा उन्मादन, तेश्रोमा विद्वेषण, चौथोमा उच्चाटन, पाँचौंमा गाउँ-उच्चाटन, छैटौंमा जल स्तम्भन, सातौंमा स्तम्भन र आठौंमा वशीकरण बताइएको छ । यसबाहेक अन्धो, बहिरो आदि बनाउने प्रयोग नवौं र दशौं प्रकरणमा वर्णन गरिएको छ ।

**बधिरोलूककरणे भूतज्वरकरं तथा ।**
**मेधानां स्तम्भनं चैव दध्यादिकविनाशनम् ॥२३॥**
**मत्तोन्मत्तकरं चैव गजवाजि प्रकोपनम् ।**
**आकर्षणं भुजङ्गानां मानवानां तथैव च ॥२४॥**
**सस्यादि नाशनं चैव परग्रामप्रवेशनम् ।**
**वेतालादिकसिद्धिश्च पादुकाञ्जनसिद्धयः ॥२५॥**

यो ग्रन्थमा बहिरो बनाउने, उल्लू बनाउने, भूत लगाउने, जरो लगाउने, दिमागको ग्रहण गर्ने क्षमतालाई रोक्ने, दही आदि नष्ट गर्ने, पागल बनाउने, हात्ती-घोडा आदिलाई पागल बनाउने, सर्प र

मानिसलाई आकर्षण गर्ने, अनाज आदि नाश गर्ने, अर्काको शहरमा बलपूर्वक छिर्ने तथा भूत, प्रेत, पादुका, अञ्जन आदि सिद्ध गर्ने जस्ता विधिहरूको वर्णन गरिएको छ ।

कौतुकञ्चेन्द्रजालञ्च यक्षिणीमन्त्रसाधनम् ।
गुटिका खेचरत्वञ्च मृतसञ्जीवनादिकम् ॥२६॥
अन्यान् बहूँस्तथा रौद्रान् विद्यामन्त्रास्तथा परम् ।
औषधञ्च तथा गुप्तं कार्यं वक्ष्यामि यत्नतः ॥२७॥
उड्डीशं यो न जानाति स रुष्टः किं करिष्यति ।
मेरुं चालयते स्थानात् सागरं[1] प्लावयेन्महीम् ॥२८॥

इन्द्रजाल खेल्ने विधि, यक्षिणी साधना गर्ने मन्त्र, गुटिका बनाउने विधि, आकाशमा जाने (वा विचरण गर्ने) विधि, मरेकालाई बिउँताउने विधि आदि भयानक विद्याका विधिहरू तथा उत्तम मन्त्र, उत्तम औषधी जस्ता गोप्य कार्यको पनि वर्णन गर्नेछु । जो मानिस शिव भगवान्ले बताएको यो उड्डीशतन्त्र जान्दैन उ रिसाएर के नै गर्न सक्दछ र ? उड्डीशतन्त्रले सुमेरु पर्वतलाई हटाउने र पृथ्वीलाई डुबाउने क्षमता राख्दछ ।



**मन्त्र साधनाका लागि योग्य पात्र**

अकुलीनोऽधमोऽबुद्धिर्भक्तिहीनः क्षुधान्वितः ।
मोहितः शङ्कितश्चापि निन्दकश्च विशेषतः ॥२९॥
अभक्ताय न दातव्यं तन्त्रशास्त्रमनुत्तमम् ।
तथैतैः सह संयोगे कार्यं नोड्डीशकी ध्रुवम् ॥३०॥

वर्णसंकर, नास्तिक, भक्तिहीन, भोको, मोहमा फँसेको, डराएको र परनिन्दा गर्ने मानिसलाई बताउन हुँदैन किन कि तीबाट यो उड्डीशतन्त्रको प्रयोगमा कहिल्यै सिद्धि प्राप्त हुन सक्दैन ।

यदि रक्षेत् सिद्धिमेतामात्मानं तु तथैव च ।
देवतागुरुभक्ताय दातव्यं सज्जनाय च ॥३१॥
तपस्विबालवृद्धानां तथा चैवोपकारिणाम् ।
निश्चितं सुमति[2] प्राप्य यथोक्तं भाषितानि च ॥३२॥

---

१. ख पुस्तकमा-सागरे । २. ख पुस्तकमा-सुमतिं ।

यसैले तन्त्रविद्यामा सिद्धि प्राप्त गर्न र आफ्नो आत्मालाई रक्षा गर्न चाहनेले देवता, गुरु, भक्त, सज्जन, बालक, तपस्वी, वृद्ध, सत्यवादी र परोपकारी व्यक्तिहरूका लागि नै यो विद्या दान गरून् । यसो गर्नाले आत्माको रक्षा र तन्त्रमा सिद्धि प्राप्त हुन्छ ।

### तन्त्रको महत्व

**न तिथिर्न च नक्षत्रं नियमो नास्ति वासरः ।**
**न व्रतं नियमो होमः कालवेला विवर्जितम् ॥३३॥**
**केवलं तन्त्रमात्रेण ह्यौषधी सिद्धिरूपिणी ।**
**यस्य साधन मात्रेण क्षणात् सिद्धिश्च जायते ॥३४॥**

यस प्रयोगका लागि तिथि, बार, नक्षत्र, व्रत, होम र साइत चाहिँदैन केवल तन्त्रले नै औषधीलाई सिद्धिदायक पार्दछ । यसको साधनाले एकैछिनमा कठिन प्रयोग पनि सफल हुने गर्दछ ।

### गुरु नथापी मन्त्र सिद्ध हुँदैन



**शशिहीना यथा रात्री रविहीनं यथा दिनम् ।**
**नृपहीनं यथा राज्यं गुरुहीनं च मन्त्रकम् ॥३५॥**

चन्द्रमा बिनाको रात, सूर्य बिनाको दिन, राजा बिनाको राज्य जस्तै गुरु बिनाको मन्त्र पनि फलहीन हुन्छ ।

### मन्त्रको शक्ति

**इन्द्रस्य च यथा वज्रं पाशश्च वरुणस्य च ।**
**यमस्य च यथा दण्डो वह्नेश्शक्तिर्यथा दहेत् ॥३६॥**
**तथैवैते महायोगाः प्रयोज्याः क्षेमकर्मणि ।**
**सूर्यं प्रपातयेद्भूमौ नेदं मिथ्या भविष्यति ॥३७॥**

जसरी इन्द्रको वज्रले, वरुणको पाशले, यमराजको दण्डले र आगोको शक्तिले जसरी जलाउँदछ त्यसरी नै ठूलाठूला कार्य पनि यी मन्त्रले तुरुन्त सिद्ध हुन्छन् । यी मन्त्रमा सूर्यलाई समेत पृथ्वीमा खसाल्न सक्दछ भन्ने कुरा गलत होइन ।

**मारण सिद्धि प्रयोगका नियम**

**अपकारिषु दुष्टेषु पापिष्ठेषु जनेषु च ।**
**प्रयोगैर्हन्यमानेषु दोषो नैव प्रजायते ॥३८॥**
**योजयेदनिमित्तं यो आत्मघाती न संशयः ।**
**असन्तुष्टः प्रयोगे यः शास्त्रमेतन्न सिद्धिदम् ॥३९॥**

दुष्ट, दुराचारी, दुराग्रही, नास्तिक र पापी मानिसमा मारणको प्रयोग गर्नुपर्दछ । बिना कुनै प्रयोजन कसैमाथि मारण शक्ति प्रयोग गरिए आफ्नै नाश हुन्छ । जसलाई यी क्रियामा विश्वास छैन उसलाई यी शास्त्रीय प्रयोगबाट सफलता प्राप्त हुँदैन ।

**मारण सिद्धिको प्रयोगका नियम**

**अथातः सम्प्रवक्ष्यामि प्रयोगं मारणाभिधम् ।**
**सद्यः सिद्धिकरं नृणां श्रृणु रावण यत्नतः ॥४०॥**



हे रावण ! अब म तिमीलाई मानिसले तुरुन्त सिद्धि प्राप्त गर्ने मारण सिद्धिको प्रयोगका बारेमा बताउँदछु । तिमी ध्यान दिएर सुन ।

**मारणं न वृथा कार्यं यस्य कस्य कदाचन ।**
**प्राणान्तसङ्कटे जाते कर्त्तव्यं भूतिमिच्छता ॥४१॥**

मारण शक्तिको प्रयोग जोकोहीलाई हावातालमा नगर्नू । आफ्नो ज्यान जाने अवस्था आएमा मात्र यसको प्रयोग गर्नू ।

**मूर्खेण तु कृते तन्त्रे तस्मिन्नेव[१] समापयेत् ।**
**तस्माद्रक्ष्यं सदात्मानं मारणं न क्वचिच्चरेत् ॥४२॥**

मूर्खबाट गरिने तन्त्रको प्रयोगले उसैलाई नाश गर्दछ । यसैले आफ्नो आत्मालाई सधैं रक्षा गर्न चाहनेले सम्भव भएसम्म मारण शक्तिको प्रयोग नगर्नू ।

---

१. ख पुस्तकमा-स्वस्मिन्नेव ।

**ब्रह्मात्मानं तु विततं दृष्ट्वा विज्ञानचक्षुषा ।**
**सर्वत्र मारणं कार्यमन्यथा दोषभाग्भवेत् ॥**
**कर्त्तव्यं मारणं चेत्स्यात्तदा कृत्यं समाचरेत् ॥४३॥**

जसले सारा संसारलाई ब्रह्मस्वरूप हो भनी जान्दछ र आफ्ना ज्ञानरूपी आँखाले सबैलाई ब्रह्म समान देख्दछ। उसले यदि सङ्कट आए मारण विद्याको गर्नु सही हुन्छ । यसबाहेक जसले मारण विद्या प्रयोग गर्दछ उ पापी हुन्छ । यदि मारण विद्या प्रयोग गर्नु कर्तव्य देखिन आए त्यसबेला तल उल्लेखित विधिले यो विद्याको प्रयोग गर्नुपर्दछ ।

**मारण विधि**

**रिपुपादतलात्पांसु गृहीत्वा पुत्तलीं कुरु ।**
**चिताभस्मसमायुक्तं मध्यमारुधिरान्वितम् ॥४४॥**

शत्रुका पैँताला मुनिको माटोमा चिताको खरानी र माझिऔँलाको रगत मिसाएर त्यसको एउटा पुत्ला बनाउनू ।



**कृष्णवस्त्रेण संवेष्ट्य कृष्णसूत्रेण बन्धयेत् ।**
**कुशासने सुप्तमूर्तिर्दीपं[1] प्रज्ज्वालयेत्ततः ॥४५॥**

यसपछि उक्त पुत्लालाई कालो रङ्को कपडामा बेरी बाहिरबाट कालो धागोले बाँध्नू । अनि त्यो पुत्लालाई कुशको आसनमा सुताउनू । अनि त्यहाँ दियो बाल्नू ।

**अयुतं प्रजमेन्मन्त्रं पश्चादष्टोत्तरं शतम् ।**
**मन्त्रराजप्रभावेण माषांश्चाष्टोत्तरं शतम् ॥४६॥**

पहिले दश हजार पटक, त्यसपछि एक सय आठ वटा मास लिई त्यसपछि पुनः एक सय आठ पटक मन्त्र जप गर्नू ।

---

१. ख पुस्तकमा-स्वापयेत् मूर्तीं दीपं ।

**पुत्तलीमुखमध्ये तु निक्षिपेत् सर्वमाषकान् ।**
**अर्धरात्रिकृते योगे शक्रतुल्योऽपि मारयेत् ॥४७॥**

अनि यो मन्त्रिएको मास सबैलाई त्यो पुत्लाको मुखमा  हालिदिनू । आधारातमा यसको प्रयोग गर्नाले इन्द्रसमान शत्रु पनि नाश हुन्छ ।

**प्रातः काले पुत्तलिकां श्मशाने च विनिक्षिपेत् ।**
**मासात्मकप्रयोगेण रिपोर्मृत्युर्भविष्यति ॥४८॥**

बिहान यो पुत्लालाई लगेर मसानमा लगी गाडिदिनू । यसरी एक महिनासम्म मारण विद्या प्रयोग गर्नाले अवश्य नै शत्रुको मृत्यु हुन्छ ।

**मारणमन्त्रः-**
**ॐ नमः कालसंहाराय अमुकं हन हन क्रीं हुँ फट् भस्मी कुरु कुरु स्वाहा ।**
**निम्बकाष्ठं समादाय चतुरङ्गुलमानतः ।**
**शत्रुकेशान् समालिप्य ततो नाम समालिखेत् ॥४९॥**
**चिताङ्गारे च तन्नाम्ना धूपं दद्यात् समाहितः ।**
**त्रिरात्रं सप्तरात्रं वा यस्य नाम उदाहृतम् ॥५०॥**
**कृष्णाष्टम्यां चतुर्दश्यां चाष्टोत्तरशतं जपेत् ।**
**प्रेतो गृह्णाति तच्छीघ्रं मन्त्रेणानेन मन्त्रवित् ॥५१॥**

उल्लेखित मन्त्रमा अमुक शब्द भएका स्थानमा शत्रुको नाम लिनू । चार अमल लामो नीमको काठ लिएर त्यसमा शत्रुको कपाल बेर्नू । कपालले नै शत्रुको नाम लेख्नू र त्यो नामलाई साबधानीपूर्वक चिताको आगोले त्यो काठलाई धूप दिनू । यसरी सात रातसम्म जसको नाममा गरिन्छ उसलाई प्रेतले समाउँदछ । प्रयोग गर्नेले कृष्णपक्षको अष्टमीबाट शुरु गरी चतुर्दशीसम्ममा समाप्त गर्नू । उसले हरेक दिन निम्न मन्त्र एक सय आठ पटक जप गर्नू ।

**मन्त्रः-ॐ नमो भगवते भूताधिपतये विरूपाक्षाय घोरदंष्ट्रिणे विकरालिने ग्रहक्षयभूतेनानेन शङ्कर अमुकं हन हन दह दह पच पच गृह्ण गृह्ण हुँ फट्[1] ठः ठः ॥**

---

१. ख पुस्तकमा फट् शब्दपछि स्वाहा रहेको ।

(यो मन्त्रको प्रयोगमा यही मन्त्र एक सय आठ पटक जप गर्नुपर्दछ । प्रयोग गर्दा जहाँ अमुक शब्द छ त्यहाँ जसमाथि प्रयोग गर्न लागिएको हो उसको नाम लिनुपर्दछ ।) ।

**नरास्थिकीलकं पुष्ये गृह्णीयाच्चतुरङ्गुलम् ।**
**निखनेत्तु गृहे यावत्तावत्तस्य कुलक्षयः ।।५२।।**

चार अमल लामो मानिसको हाड पुष्य नक्षत्रमा लगेर जसका घरमा गाडिन्छ उसको निश्चय नै परिवारसहित नाश हुन्छन् । (यसमा मन्त्रको प्रयोग हुँदैन) ।

**सर्पास्थ्यङ्गुलमात्रं चाश्लेषायां च रिपोर्गृहे ।**
**निखनेच्छतधा जप्तं मारयेत् रिपुसन्ततिम् ।।५३।।**

एक अमल सर्पको हाड लगी निम्न मन्त्र पढ्दै अश्लेषा नक्षत्रका दिन शत्रुका घरमा खाल्डो खनी गाड्नाले शत्रुका सन्तान नाश हुन्छन् । यो मन्त्र दश हजार पटक जपेर सिद्ध गरिनु पर्दछ ।

**मन्त्रः- ॐ सुरेश्वराय स्वाहा ।।**



**अश्वास्थिकीलमश्विन्यां निखनेच्चतुरङ्गुलम् ।**
**शत्रोर्गृहे निहन्त्याशु कुटुम्बं वैरिणां कुलम् ।।५४।।**

घोडाको चार अमल लामो हाडलाई अश्विनी नक्षत्रका दिन निम्न मन्त्र पढ्दै शत्रुका घरमा लगेर गाड्नाले उसका कुटुम्बको नाश हुन्छ ।

**मन्त्रः- ॐ हुं हुं फट् स्वाहा ।**[१]

यो मन्त्रले सत्र पटक मन्त्रेर गाड्नु पर्दछ ।

**आर्द्रायां निम्बबन्दाकं शत्रोः शयनमन्दिरे ।**
**निखनेन्मृतवच्छत्रुरुद्धृते च पुनः सुखी ।।५५।।**

---

१. ख पुस्तकमा यो मन्त्रपछि “सप्तदशाभिमन्त्रितं कृत्वा निखनेत्” उल्लेख भएको ।

जुन घरमा शत्रु सुत्दछ त्यो घरमा आर्द्रा नक्षत्रमा नीमको किला लगी खाल्टो खनेर गाडिदिनू । यसले शत्रुलाई मारण गर्दछ, किलो निकालेपछि पुनः पहिलेजस्तै सुख हुन थाल्दछ ।

**तथा शिरीषवन्दाकं पूर्वोक्तेनोड्डुना हरेत् ।**
**शत्रोर्गेहे स्थापयित्वा रिपोर्नाशो भविष्यति ॥५६॥**

यही विधिले शिरीषको किला शत्रुका घरमा गाडेमा पनि उसको नाश हुन्छ ।

**मन्त्रः- ॐ हुं हुं फट् स्वाहा ।**[1]

माथिका दुवै प्रयोगमा यो मन्त्र एक्काईस पटक मन्त्रेर किला गाड्नू ।

**मन्त्रः-ॐ डं डां डिं डीं डुं डूं डें डैं डों डौं डं डः अमुकं गृह्ण गृह्ण हुं हुं ठः ठः ।**[2]

यो मन्त्रले मानिसको हाडको किला बनाएर हजार पटक मन्त्री  जसको नाम लिएर मसानमा लगी गाडिन्छ त्यसको जरोका कारण मृत्यु हुन्छ । यो कीला यसरी नै आधारातमा जसको नाम लिएर जसका घरमा गाडिन्छ उसको नाश हुन्छ ।



**रिपुविष्ठां वृश्चिकं च खनित्वा तु विनिःक्षिपेत् ।**
**आच्छाद्यावरणेनाथ तत्पृष्ठे[3] मृत्तिकां क्षिपेत् ॥**
**म्रियते मलरोधेन उद्धृते च पुनः सुखी ॥५७॥**

शत्रुको दिसा र बिच्छीलाई एउटा भाँडामा राखी बिर्को बन्द गरेर माटोको लेप लगाउनू र जमिनमा गाड्नू । यसबाट शत्रु दिसा रोकिएर मरे तुल्य हुन्छ । जब यसलाई बाहिर निकालिनछ तब उ दुःखबाट पुनः पहिले जस्तै हुन्छ ।

**शत्रुपादतलात् पांसु गृह्णीयाद् भौमवासरे ।**
**गोमूत्रेण तु सिञ्चित्वा प्रतिमां कारयेत् सुधीः ॥५८॥**

---

१. ख पुस्तकमा यो मन्त्रपछि "एकविंशति वारमभिमन्त्रितं कृत्वा द्वयोरेपि प्रयोगे निखनेत् ।" उल्लेख भएको । २. ख पुस्तकमा यो मन्त्रपछि "अनेन मन्त्रेण सहस्रवारमभिमन्त्रितं नरास्थिं श्मशाने निखनेन मृत्युः ।" उल्लेख भएको । ३. ख पुस्तकमा-तं पृष्ठे ।

मङ्गलबारका दिन शत्रुको पैँतालामुनिको माटो लेराई त्यसलाई गहुँतले भिजाउनू । अनि विद्वानले यो माटोबाट शत्रुको नाममा एउटा पुत्ला बनाउनू ।

**निर्जने च नदीतीरे स्थापयेत् स्थण्डिलोपरि ।**
**लोहशूलं च निखनेत्तद्वक्षसि सुदारुणम्॥**
**तद्वामे भैरवं कृष्णं बलिभिः प्रत्यहं यजेत्[१] ॥५९॥**

अनि एकान्तस्थलमा वा नदीका किनारमा वेदी बनाएर त्यो पुत्लालाई राख्नू । त्यसपछि पुत्लाको छातीमा फलामको एउटा चोखो त्रिशूल गाड्नू । त्यो पुत्लाको देब्रेतिर कालभैरवको मूर्ति स्थापना गरी हरेक दिन त्यसको पूजा गरी बलि दिनू ।

**एकादश बटून् तत्र परमान्नेन भोजयेत् ।**
**अखण्डदीपं तस्याग्रे कटुतैलेन ज्वालयेत्॥ ६०॥**

यही स्थानमा एघार जना बालकलाई लगी उत्तम भोजन खुवाउनू । भैरवका अगिल्तिर सर्सिउँको तेल हाली अखण्ड दीप बाल्नू ।



**ब्याघ्रचर्मासनं कृत्वा निवसेत्तस्य दक्षिणे ।**
**दक्षिणाभिमुखो रात्रौ जपेन्मन्त्रमतन्द्रितः ॥६१॥**

त्यो पुत्लाको दाहिनेतिर बाघको छाला ओछ्याई दक्षिणतिर मुख फर्काएर बसी इन्द्रियलाई वशमा पारेर एकाग्र मनले निम्न लिखित मन्त्र जप गर्नू ।

**ॐ नमो भगवते महाकालभैरवाय कालाग्नितेजसे अमुकं**
**मे शत्रुं मारय मारय पोथय पोथय हुँ फट् स्वाहा ।**
**अयुतं प्रजपेदेनं मन्त्रं निशि समाहितः ।**
**एकोनत्रिंशद्दिवसैर्मारणं[२] जायते ध्रुवम् ॥६२॥**

उल्लेखित मन्त्र सावधान भएर रात रात गरी दश हजार पटक जप गर्नू । उनन्तीस दिनमा यो कार्य सिद्ध हुन्छ अर्थात् मारणको प्रयोग सफल हुन्छ । यो मन्त्रमा अमुक शब्द आएका स्थानमा प्रयोग गरिने व्यक्तिको नाम लिनु पर्दछ ।

---

१. ख पुस्तकमा- जपेत् । २. ख पुस्तकमा-एकोनविंशसद्दिवसैर्मारणं ।

## आर्द्रपटी साधना

ॐ अस्य श्री आर्द्रपटीमहाविद्यामन्त्रस्य दुर्वासा ऋषिर्गायत्री छन्दः, हुँ बीजं, स्वाहा शक्तिः, ममाऽमुकशत्रुनिग्रहार्थे जपे विनियोगः ।
आर्द्रपटीसाधन मन्त्रः- ॐ नमो भगवति आर्द्रपटेश्वरी हरितनीलपटे काली आर्द्रजिह्वे चाण्डालिनी रुद्राणी कपालिनी ज्वालामुखी सप्तजिह्वे सहस्रनयने एहि एहि अमुकं ते पशुं ददामि अमुकस्य जीवं निकृन्तय एहि जीवितापहारिणी हुँ फट् भूर्भुवः स्वः फट् रुधिरार्द्रवशाखादिनि मम शत्रून् छेदय छेदय शोणितं पिब पिब हुँ फट् स्वाहा । केवलं केवलं जपमात्रेण मासान्ते शत्रुमारणम् ।

कृष्णाष्टमीं समारभ्य यावत् कृष्णचतुर्दशीम् ॥१॥
शत्रुनामसमायुक्तं मन्त्रं तत्त्वञ्जपेन्नरः ।
रिपुपादस्थधूल्याश्च कुर्यात् पुत्तलिकां ततः ॥२॥
अजापुत्रबलिं दत्वा वस्त्रं रक्तेन संलिपेत् ।
ततो गृहीत्वा तद्वस्त्रं न्यसेत् पुत्तलिकोपरि ॥३॥
यावच्छुष्यति तद्वस्त्रं तावच्छत्रुविनश्यति ।[१]



## वैरिमारण कवच

ॐ अस्य श्रीकालिकाकवचस्य भैरवऋषिर्गायत्री छन्दः, श्रीकालीदेवता, सद्यः शत्रुहननार्थे विनियोगः ।
ध्यात्वा कालीं महामायां त्रिनेत्रां बहुरूपिणीम् ।
मन्त्रराजप्रभावेण नात्र कार्या विचारणा ॥४॥[२]

नुहाउने आदि दिनहुँका काम सकी पवित्र आसनमा बसेर हातमा जल लिई आर्द्रपटी भगवतीको विनियोग गर्नू अर्थात् "अस्य श्री" बाट शुरु गरी "विनियोगः" सम्म पढ्नू । यसपछि हातमा लिइएको जल पृथ्वीमा छाडिदिनू । विनियोग र मन्त्रमा जहाँ जहाँ अमुक शब्द आउँदछ त्यहाँ त्यहाँ शत्रुको नाम लिने गर्नू । विनियोग नगरी आर्द्रपटी मन्त्र जप गर्नाले सिद्धि प्राप्त हुँदैन । यो आर्द्रपटी मन्त्र सबै

---

१. ख पुस्तकमा यसपछि "मन्त्रराजप्रभावेण नात्र कार्या विचारण ॥४॥" थप रहेको ।

२. ख पुस्तकमा यसपछि "चतुर्भुजां लोलजिह्वां पूर्णचन्द्रनिभाननाम् ॥" रहेको ।

मन्त्रमा उत्तम र मारण प्रयोगमा तत्काल फल दिने क्षमताको हुन्छ । यो मन्त्र एक महिना मात्र जप गर्नाले पनि शत्रुको मृत्यु हुन्छ । यो मन्त्रलाई कृष्णपक्षको अष्टमीदेखि चतुर्दशीसम्म एक सय आठ पटक जप गर्नू र अमुकका स्थानमा शत्रूको नाम लिनू । अन्तिम दिन शत्रूका पैंताला मुनिको माटो लेराई त्यसको पुत्ला बनाउनू । कालीका लागि बोकाको बलि दिनू । बोकाको रगतमा एउटा कपडा भिजाई त्यसले पुत्लालाई ढाकिदिनू । यस अवधिमा मन्त्र जप गरिरहनू । यसरी गरिएको मारणको प्रयोगले रगतले भिजेको कपडा सुक्दानसुक्दै निश्चय नै शत्रु मर्दछ ।

## वैरिमारणकवचम्

**ॐ अस्य श्रीकालिकाकवचस्य भैरवऋषिर्गायत्रीछन्दः श्रीकालीदेवता सद्यः शत्रुहननार्थे विनियोगः ।**

पहिले हातमा जल लिएर माथिको विनियोग पढेर जललाई जमिनमा छाडि दिनू ।

## ध्यानम्



**ध्यात्वा कालीं महामायां त्रिनेत्रां बहुरूपिणीम् ।**
**चतुर्भुजां लोलजिह्वां पूर्णचन्द्रनिभाननाम् ॥१॥**

महामाया काली जसको तीन आँखा, धेरै रूप, चार हात, लपलपाउँदो जिभ्रो, पूर्णिमाका चन्द्रमाजस्तो अनुहार र

**नीलोत्पलदलश्यामां शत्रु सङ्घविदारिणीम् ।**
**नरमुण्डं तथा खड्गं कमलं वरदं तथा ॥२॥**

नीलकमल जस्तै कालो वर्ण छ अनि जो शत्रुका समूह नाश गर्दछिन् तथा जसले मानिसको खोपडी, खड्ग, कमल र वरमुद्रा चार हातमा धारण गरेकी छिन्,

**बिभ्राणां रक्तवसनां घोरदंष्ट्रास्वरूपिणीम् ।**
**अट्टाट्टहासनिरतां सर्वदा च दिगम्बराम् ॥३॥**

रगत लतपतिएका वस्त्र लगाएकी तथा ठूलाठूला दाह्रा भएकी देख्दै डरलाग्दी अनि खित्का छाडेर हाँसिरहने तथा दिशालाई वस्त्र बनाएकी,...

**शवासनस्थितां देवीं मुण्डमालाविभूषिताम् ।**
**इति ध्यात्वा महादेवीं ततस्तु कवचं पठेत् ॥४॥**

लाशलाई आसनी बनाएकी र मुण्डमाला लगाएकी यस्ती महादेवीलाई ध्यान गरेपछि कवचलाई पाठ गर्नू ।

**कवचम्**

**ॐ कालिका घोररूपाढ्या सर्वकामप्रदा शुभा ।**
**सर्वदेवस्तुता देवी शत्रुनाशं करोतु मे ॥१॥**

सबै कार्यको फल दिने, डरलाग्दो रूप धारणगर्ने र सबै देवताले प्रार्थना गरिएकी हे काली देवी मेरो शत्रुलाई नाश गर्नु हवस् ।



**ह्रां ह्रीं स्वरूपिणी चैव ह्रीं ह्रीं सं हं गिनी तथा ।**
**ह्रीं ह्रीं क्षैं क्षौं स्वरूपा सा सर्वदा शत्रुनाशिनी ॥२॥**

ह्रां ह्रीं स्वरूप भएकी ह्रीं ह्रीं सं हं बीज धारण गर्ने, ह्रीं ह्रीं क्षैं क्षौं स्वरूपकी देवीले सधैं (मेरा) शत्रुको नाश गरुन् ।

**श्रीं ह्रीं ऐं रूपिणी देवी भवबन्धविमोचिनी ।**
**यथा शुम्भो हतो दैत्यो निशुम्भश्च महासुरः ॥३॥**

हे श्रीं ह्रीं ऐं रूपिणी देवी ! हे मोक्षप्रदायिनी ! जसरी शुम्भ, निशुम्भ जस्ता महादैत्य मारिएका थिए त्यसरी नै मेरा बलिया शत्रुलाई नाश गरि दिनु होस् ।

**वैरिनाशाय वन्दे तां कालिकां शङ्करप्रियाम् ।**
**ब्राह्मी शैवी वैष्णवी च वाराही नरसिंहिका ॥४॥**

ब्राह्मी, शैवी, वैष्णवी, वाराही, नरसिंहिका आदि अनेक रूप लिने शङ्करकी प्रिया कालिकालाई शत्रु नाश गर्नका लागि नमस्कार गर्दछु ।

कौमारी श्रीश्च चामुण्डा खादयन्तु मम द्विषान् ।
सुरेश्वरी घोररूपा चण्डमुण्डविनाशिनी ॥५॥

कौमारी, श्री, सुरेश्वरी र भयानक रूप लिने; चण्ड मुण्ड नाश गर्न चामुण्डाको रूप लिने देवीले मेरा शत्रुलाई भक्षण गरुन् ।

मुण्डमालावृताङ्गी च सर्वतः पातु मां सदा ।
ह्रीं ह्रीं कालिके घोरदंष्ट्रे रुधिरप्रिये ॥६॥

हे ह्रीं ह्रीं स्वरूपकी, डरलाग्दा दाह्रा भएकी, मुण्डमाला लगाएकी र रगत पिउन पाए सदा खुशी रहने भएकी कालिकाले मलाई सबै किसिमले सधैं रक्षा गर ।

मन्त्रः- रुधिरपूर्णवक्त्रे च रुधिरावितस्तनि मम शत्रून् खादय खादय हिंसय हिंसय मारय मारय भिन्धि भिन्धि छिन्धि छिन्धि उच्चाटय उच्चाटय द्रावय द्रावय शोषय शोषय यातुधानीं[1] चामुण्डे ह्रीं ह्रीं वां वीं कालिकायै सर्वशत्रून् समर्पयामि स्वाहा ।



ॐ जहे जहे[2] किटि किटि किरि किरि कटु कटु मर्दय मर्दय मोहय मोहय हर हर मम रिपून् ध्वंसय ध्वंसय भक्षय भक्षय त्रोटय त्रोटय यातुधानिका चामुण्डा सर्व जनान् राजपुरुषान् राजश्रियं देहि देहि नूतनु नूतनु[3] धान्यं जक्षय जक्षय
क्षां क्षीं क्षं क्षैं क्षौं क्षः[4] स्वाहा ।

इत्येतत् कवचं दिव्यं कथितं तव रावण ।
ये पठन्ति सदा भक्त्या तेषां नश्यन्ति शत्रवः ॥१॥
वैरिणः प्रलयं यान्ति व्याधिताश्च भवन्ति हि ।
धनहीनाः पुत्रहीनाः शत्रवस्तस्य सर्वदा ॥२॥
सहस्रपठनात् सिद्धिः कवचस्य भवेत्तदा ।
ततः कार्याणि सिद्ध्यन्ति नान्यथा मम भाषितम् ॥३॥

---

१. ख पुस्तकमा- यातुधानिके । २. ख पुस्तकमा-जहि जहि । ३. ख पुस्तकमा-नूतनं नूतनं । ४. ख पुस्तकमा-क्षां क्षीं क्षूं क्षैं क्षौं ।

यसरी बताएर शिव भगवान् पुनः भन्नुहुन्छ -हे रावण ! यो दिव्य कवच र दिव्य मन्त्र मैले तिमीलाई बयान गरेँ । जो मानिस भक्तिभावले नित्य यो कवच पाठ गर्दछ उसका शत्रुहरू नाश हुनेछन् । यो कवच पाठ गर्नेका शत्रु रोगले पीडित भई नष्ट हुनेछन् । ती शत्रुले धन तथा पुत्रसुख कहिल्यै पाउने छैनन् । यो कवच एक हजार पटक पाठ गर्नाले सिद्धि प्राप्त हुन्छ । कवच सिद्ध भएपछि यसको प्रयोग पनि निश्चय नै सिद्ध हुन पुग्दछ ।

**स्मशानाङ्गारमादाय चूर्णं कृत्वा विधानतः ।**
**पादोदकेन पिष्ट्वा च लिखेल्लोहशलाकया ॥४॥**
**भूमौ शत्रून् हीनरूपान् उत्तराशिरसस्तथा ।**
**हस्तं दत्वा तद्[1] हृदये कवचं तु स्वयं पठेत् ॥५॥**

यो मारण कवच र मन्त्र सिद्ध गरेपछि मसानबाट अँगार लेराई धुलो बनाएर त्यसलाई शत्रुको गोडाको पानी हालेर पिस्नू । यसपछि यसले फलामको कलम मार्फत जमिनमा शत्रुको कुरूप चित्र (वा मूर्ति) लेख्नू । लेख्दा त्यो मूर्तिकोटाउको उत्तरतिर र गोडा दक्षिणतिर पारेर बनाउनू ।

**प्राणप्रतिष्ठां कृत्वा वै तथा मन्त्रेण मन्त्रवित् ।**

**हन्यात् अस्त्रप्रहारेण[2] शत्रोश्च कण्ठमक्षयम् ॥६॥**
**ज्वलदङ्गारलेपेन भवति ज्वरितो भृशम् ।**
**प्रोक्षणेर्वामपादेन दरिद्रो भवति ध्रुवम् ॥७॥**

यसपछि त्यो मूर्तिको टाउकामा हात राखी मारण कवच पाठ गर्नू । मारण मन्त्र जान्ने व्यक्तिबाट मूर्तिको प्राणप्रतिष्ठा गराउनू । यसपछि हतियार लिएर त्यो मूर्तिको टाउको काटिदिनू । अनि त्यो काटिएको मूर्तिमा रातो फिलिङ्गोको लेप दल्नू । यसबाट शत्रु जरोले पीडित भई मर्दछ । मूर्तिको देब्रे गोडा पुछ्नाले शत्रु निश्चय नै दरिद्र हुन्छ ।

**वैरिनाशकरं प्रोक्तं कवचं वश्यकारकम् ।**
**परमैश्वर्यदं चैव पुत्रपौत्रादिवृद्धिदम् ॥८॥**
**प्रभातसमये चैव पूजाकाले प्रयत्नतः ।**
**सायंकाले तथा पाठात् सर्वसिद्धिर्भवेद् ध्रुवम् ॥९॥**

---

१. ख पुस्तकमा-तत् । २. ख पुस्तकमा-शस्त्र प्रहारेण ।

यो कवच शत्रु नाशक, सबैलाई वशमा पार्ने र ठूलो ऐश्वर्य दिने गुणको हुन्छ । बिहान पूजा गर्दा र साँझमा विधिपूर्वक यसको पाठ गर्नाले अवश्य नै सबै खालका सिद्धि प्राप्त हुनेछ ।

**शत्रुरुच्चाटनं याति देशाद् वै विच्युतो भवेत् ।**
**पश्चात् किंकरतामेति सत्यं सत्यं न संशयः ॥१०॥**

नित्य यो कवच पाठ गर्नाले शत्रु विरक्त हुन्छ र देश नै छाडेर विदेशतिर जान्छ । अथवा आफ्ना अधिनमा आई दास बन्दछ, यसमा कुनै शङ्का छैन ।

**॥ इति उड्डीशतन्त्रे रावणशिवसम्वादे मारण प्रयोग कथन नाम प्रथमः पटलः ॥१॥**

## अथ द्वितीयः पटलः

(दोश्रो खण्ड)

## अथ मालानिर्णयः

(जप गर्ने माला)

विभिन्न प्रयोजनमा प्रयोग गर्ने जपमाला

**प्रवालवज्रमणिभिर्वश्यपौष्टिकयोर्जपेत् ।**
**मत्तेभदन्तमणिभिर्जपेदाकृष्टकर्मणि ॥१॥**
**साध्यकेशसूत्रयुक्ति(क्त)स्तुरङ्गदशनोद्भवैः ।**
**अक्षमालां परिष्कृत्य विद्वेषोच्चाटने जपेत् ॥२॥**

पुष्टिकर्म वा वशीकरण गर्ने मन्त्रको जप गर्दा मुगा तथा हीरा वा मणिको मालाले जप गर्नू । आकर्षण गर्ने प्रयोजनका लागि मन्त्र जप गर्दा हात्तीको दाँतले बनेको मालाले जप गर्नू । जुन प्रयोजनमा जेको माला प्रयोग गर्ने भनेर लेखिएको छ त्यसमा त्यही मालाको प्रयोग गर्नुपर्दछ । उच्चाटनको प्रयोग गर्नुपर्दा धागो अथवा रौँमा उनिएको घोडाको दाँतको अथवा स्फटिकको मालाले जप गर्नाले विद्वेषण र उच्चाटन सफल हुने गर्दछ । 

**मृतस्य युद्धशून्यस्य दशनैर्गर्दभस्य च ।**
**कृत्वाक्षमालां जप्तव्यं शत्रोर्मारणमिच्छता ॥३॥**

शुत्रलाई प्रयोग गरिने मारण सिद्धिमा अथवा सेनालाई स्तम्भन गर्ने सिद्धिमा जपिने मन्त्रका लागि गधाको दाँतले बनाइएको माला अथवा स्फटिकको माला प्रयोग गर्नू ।

**क्रियते शङ्खमालाभिर्धर्मकामार्थसिद्धये ।**
**पद्माक्षैः प्रजमेन्मन्त्रं सर्वकामार्थसिद्धये ॥४॥**

धर्म, धन र काम सिद्धिका लागि शङ्खको माला तथा ऐश्वर्य लगायतका सबै कार्य सिद्धिका लागि कमलको मालाले जप गर्नू ।

**रुद्राक्षमालया जप्त्वा (जप्तो) मन्त्रः सर्वफलप्रदः ।**
**स्फाटिकी मौक्तिकी वापि रौद्राक्षी वा प्रवालजा ॥**

**सरस्वती प्राप्तये च पुत्रजीवैस्तथा जपेत् ॥५॥**

रुद्राक्षको मालामा जप गरी सिद्ध गरिएका मन्त्रले सबै किसिमका फल प्रदान गर्दछ । स्फटिक, मोति, रुद्राक्ष, मुगा वा पुत्रञ्जीवा (रुद्राक्ष जस्तै दाना फल्ने वृक्षविशेष) मालामा जपी सिद्ध गरिने मन्त्रले विद्या प्राप्त हुन्छ ।

**पद्मसूत्र कृता रज्जुः शस्ता शान्तिकपौष्टिके ।**
**आकृष्ट्यु(ष्ट्यु)च्चाटयोर्वाजिपुच्छबालसमुद्भवा ॥६॥**

शान्ति र पुष्टिका लागि कमलको डाँठको रेसामा उनिएको तथा आकर्षण र उच्चाटनका लागि घोडाको पुच्छरको रौँमा उनिएको माला प्रयोग गर्नू ।

**नरस्नायुविशेषे तु मारणे रज्जुरुत्तमा ।**
**अन्यासां चाक्षमालानां रज्जुः कार्पासिकी मता ॥७॥**

मारण प्रयोगमा मानिसको नसामा उनिएको माला प्रयोग गर्नु उत्तम हुन्छ । अन्य कार्यका लागि कपासको धागोमा उनिएको माला प्रयोग गर्नू ।



**सप्तविंशति सङ्ख्याकैः कृत्वा सिद्धि प्रयच्छति ।**
**अक्षैस्तु पञ्चदशभिरभिचारफलप्रदा ॥८॥**

सत्ताईस वटा दाना भएको माला सिद्धि प्रदायक हुन्छ । अभिचार कर्ममा पन्ध्र दाना भएको माला प्रयोग गर्नुपर्दछ । जुन कार्यका लागि जस्तो माला प्रयोग गर्ने भनी बताइएको छ, त्यसमा त्यस्तै माला प्रयोग गर्नू ।

**अक्षमाला विनिर्दिष्टा मन्त्रादौ तत्त्वदर्शिभिः ।**
**अष्टोत्तरशतेनैव सर्वकर्मेषु पूजिता ॥९॥**

रुद्राक्षको मालाबाट सबै प्रकारका मन्त्रको सिद्धि प्राप्त गर्न सकिन्छ भनी मन्त्रसम्बन्धी विशेषज्ञहरूले बताएका छन् । एक सय आठ दानाको माला सबै कर्ममा सिद्धि प्रदायक हुन्छ ।

**जपेत् पूर्वमुखं वश्ये दक्षिणं चाभिचारके ।**

**पश्चिमे धनदं विद्यादुत्तरं शान्तिकं भवेत्॥**
**आयुष्यरक्षां शान्तिं च पुष्टिं वापि करिष्यति॥१०॥**

वशीकरण प्रयोगका लागि पूर्वतिर फर्केर जप गर्नू । पश्चिम फर्केर गरिने जपले धन र उत्तरतिर फर्केर जप गर्नाले शान्ति, आयु, रक्षा, पुष्टि आदि प्राप्त हुन्छ ।

जपका विधि

**यं श्रुयतेऽन्यः स तु वाचिकः स्यात्, उपांशु संज्ञो निजदेहवेद्यः ।**
**निष्कम्पदन्तौष्ठमथाक्षराणां यच्चिन्तितं स्यादिह मानसाख्यः॥११॥**

(जप तीन किसिमको हुन्छ) । जुन जप अरुले पनि सुन्नेगरी गरिन्छ त्यसलाई **वाचिक जप** भनिन्छ । जुन जप अरुले र आफैंले पनि नसुन्ने गरी गरिन्छ त्यसलाई **उपांशु जप** भनिन्छ । जुन जपमा जिब्रो, दाँत र ओठ हल्लिँदैन र मनमनै गर्ने गरिन्छ त्यसलाई **मानस जप** भनिन्छ । (मानस जपको अभ्यास गर्दै जाँदा हुने जप विधिलाई अपजा जप भनिएको छ) ।



जपका विधिको प्रयोग

**पराभिचारे किल वाचिकः स्यादुपांशुरुक्तोऽप्यथ शान्तिपुष्ट्योः ।**
**मोक्षेषु जापः किल मानसाख्यस्त्रिधा जपः पापनुदे तथोक्तः॥१२॥**

तीन किसिमका जपविधिमध्ये मारणको प्रयोगमा वाचिक, शान्ति र पुष्टि कर्ममा उपांशु तथा मोक्ष र ज्ञान प्राप्त गर्न मानस जप विधिको प्रयोग गर्नू ।

घोडालाई अन्धो बनाउने र ठिक गर्ने ओखती

**कृष्णजीरकचूर्णेन अञ्जिताक्षो न पश्यति ।**
**तक्रेण क्षालयेच्चक्षुः सुस्थो भवति घोटकः॥१३॥**

कालोजीराको धुलोले बनाइएको गाजल लगाउनाले (केही दिनमा) घोडा अन्धो हुन्छ । यस्तो आँखालाई तक्रले धोए घोडा स्वस्थ हुन्छ ।

घोडालाई बेहोस बनाउने र ठिक गर्ने ओखती

**घ्राणे छुच्छुन्दरीचूर्णे दत्ते पतति घोटकः ।**
**स्वस्थश्चन्दनपानेन नासायां तु न संशयः ॥१४॥**

पोथी छुचुन्द्रोको (मासुको) धुलो घोडाको नाकमा हाले घोडा मूर्छा परी ढल्दछ । पानीमा चन्दन घोटी नाकमा हालेपछि निश्चय नै त्यो घोडा स्वस्थ हुन्छ ।

घोडा मारिदिने मन्त्र

**अश्वास्थिकीलमश्विन्यां कुर्यात्सप्ताङ्गुलं पुनः ।**
**निखनेदश्वशालायां मारयत्येव घोटकान् ॥१५॥**
**अश्वमारण मन्त्रः - ॐ अश्वं पच पच स्वाहा ॥**
**अयुतजपात् सिद्धिः ।**

घोडाको हाडको सात अमल लामो किला बनाई अश्विनी नक्षत्रमा तबेलामा गाड्दा निश्चय नै त्यहाँ रहेका घोडाहरू मर्दछन् । किलो गाड्दा "ॐ पच पच स्वाहा" मन्त्र पढ्दै गाड्नू । यो मन्त्र सिद्ध गर्न यसलाई पहिले दश हजार पटक जप गर्नुपर्दछ ।

माछा नष्ट पारिदिने मन्त्र

**सङ्गाह्य पूर्वफल्गुन्यां बदरीकाष्ठकीलकम् ।**
**दासगृहेऽष्टाङ्गुलञ्च निखनेन्मत्स्यनाशकम् ॥१६॥**
**मत्स्यनाशनमन्त्रः- ॐ जले पच पच स्वाहा ॥**
**इत्यनेन मन्त्रेणायुतजपात्सिद्धिः ॥**

पूर्वाफाल्गुनी नक्षत्रमा बयरको काठले बनाइएको आठ अमल लामो किलो माझीको घरमा लगेर गाड्नाले उसका सबै माछाहरू नष्ट हुन्छन् । यसबेला "ॐ जले पच पच स्वाहा" मन्त्र पढ्दै गाड्नुपर्दछ । यो मन्त्रलाई दश हजार पटक जप गरी पहिले सिद्ध गर्नू ।

धोबीका कपडा नष्ट पारिदिने मन्त्र

**गृहीत्वा पूर्वफल्गुन्यां जातीकाष्ठस्य कीलकम् ।**
**अष्टाङ्गुलप्रमाणं तु निखन्याद्रजके गृहे ॥**
**शताभिमन्त्रितं तेन तस्य वस्त्राणि नाशयेत् ॥१७॥**
**अथ मन्त्रः- ॐ कुम्भं स्वाहा ॥**
**अयुतजपात् सिद्धिर्भवति ।**

पूर्वाफाल्गुनी नक्षत्रमा आठ अमल लामो चमेलीको काठको किला लगेर "ॐ कुम्भं स्वाहा" मन्त्रले सय पटक अभिमन्त्रित गरी धोबीको घरमा गाड्नाले उसक वस्त्र नष्ट हुन्छन् । (मन्त्र एक हजार पटक जप गर्नाले सिद्ध हुन्छ) ।

तेल नष्ट पारिदिने मन्त्र

**मधुकाष्ठस्य कीलं तु चित्रायां चतुरङ्गुलम् ।**
**निखनेत्तैलशालायां तैलं तत्र विनश्यति ॥१८॥**
**ॐ दह दह स्वाहा ॥ इत्यनेन सहस्रसङ्ख्याकजपः ।**

जेठीमधुको काठले बनाइएको चार अमल लामो किलालाई एक हजार पटक जप गरी सिद्ध पारिएको "ॐ दह दह स्वाहा" मन्त्र पढ्दै कोलमा लगेर गाडेमा तेल नाश हुन्छ ।

सागपात नाश गर्ने विधि

**गन्धकं चूर्णितं तत्र निक्षिपेज्जलमिश्रितम् ।**
**नश्यन्ति सर्वशाकानि शेषाण्यल्पबलानि च ॥१९॥**

गन्धकको धुलो पानीमा घोलेर खेतबारीका सागमाथि छर्किने हो भने सबै साग नष्ट हुन्छ वा मर्दछ । मन्त्र पढिरहन पर्दैन ।

गाईको दूध नष्ट गरिदिने विधि

**निक्षिपेदनुराधायां जम्बुकाष्ठस्य कीलकम् ।**
**अष्टाङ्गुलं गोपगेहे गोदुग्धं परिनश्यति ॥२०॥**

जामुनु वा फँडिरको आठ अमल लामो किलालाई लगी अनुराधा नक्षत्रका दिनमा दुहिने गोठमा गाड्नाले गाईहरूको दूध नष्ट हुन्छ । (यसमा पनि मन्त्रको प्रयोग हुँदैन) ।

मदिरा नष्ट गरिदिने विधि

**षोडशाङ्गुलकं कीलं कृत्तिकायां सितार्कजम् ।**
**शौण्डिकस्य गृहे क्षिप्तं मदिरां नाशयत्यलम् ॥२१॥**

सेतो आँकको सोह्र अमल लामो कीला मदिरा बनाउनेका घरमा लगी कृत्तिका नक्षत्रमा गाड्नाले उसको मदिरा निश्चय नै नष्ट हुन्छ । (यसमा पनि मन्त्रको प्रयोग हुँदैन) ।



पान नष्ट गरिदिने विधि

**नवाङ्गुलं पूङ्गकाष्ठकीलकं निक्षिपेत् गृहे ।**
**ताम्बूलिकस्य क्षेत्रे वा ऋक्षे शतभिषाऽह्वये ॥**
**तदा तस्य च ताम्बूलं नाशयत्त्याशु निश्चितम् ॥२२॥**

सुपारीका काठको नौ अमल लामो किला बनाई शतभिषा नक्षत्र परेका दिन वरहीका घरमा वा पान-खेतमा लगेर गाडिदिनाले उसको पान नष्ट हुन्छ ।

**शस्यस्य नाशनं चाथ कथयामि समासतः ।**
**येनैव कृतमात्रेण सस्यनाशो भविष्यति ॥२३॥**

(भगवान् शङ्कर भन्नुहुन्छ-हे रावण !) म खेती नष्ट पार्ने विधि संक्षेपमा बताउँदछु । यी कर्म गर्नाले बालीनाली पूरै नष्ट हुन्छ ।

अनाज नष्ट गरिदिने विधि

**इन्द्रवज्रं पतेत् यत्र गृहीत्वा मृत्तिकां ततः ।**
**तन्मृत्तिकां समादाय वज्रं कृत्वा विचक्षणः ॥२४॥**
**क्षेत्रे यस्मिन् रोपयेत् सस्यं सर्वं विनश्यति ।**
**इमं मन्त्रं समुच्चार्य मन्त्रेणानेन मन्त्रयेत् ॥२५॥**

चटयाङ परेको जमिनको माटो लेराई बनाइएको वज्र लगेर निम्न मन्त्रले मन्त्री जुन खेतबारीमा लगेर गाडिन्छ त्यहाँको उब्जनी नष्ट हुन्छ ।

**सस्यनाशनमन्त्रः- ॐ नमो वज्रपाताय सुरपतिराज्ञापयति हुं फट् स्वाहा ॥**

(यो मन्त्र दश हजार पटक जप गर्नाले सिद्ध हुन्छ) ।

**इति श्री उड्डीशतन्त्रे रावण-शिव सम्वादे मालानिर्णय धान्यादि नाश कथनं नाम द्वितीयः पटलः ॥२॥**

## अथ तृतीयः पटलः

(तेश्रो खण्ड)

## मोहनाभिधानम्

(मोहनी विद्या)

### ईश्वर उवाच

**अथाग्रे कथयिष्यामि प्रयोगं मोहनाभिधम् ।**
**सद्यः सिद्धिकरं नृणां श्रृणु रावण यत्नतः ॥१॥**

हे रावण ! अब यसपछि म चाँडै सिद्धि प्रदान गर्ने मोहनी विद्याका बारेमा बताउँदछु, तिमी ध्यान दिएर सुन ।

**सिन्दूरं कुङ्कुमं चैव गोरोचन समन्वितम् ।**
**धात्रारसेन संपिष्ट्वा तिलकं लोकमोहनम् ॥२॥**



सिन्दूर, केशर र गोरोचन मिसाई अमलाको रसमा पिसेर त्यसको तिलक (टीका) लगाउनाले सबै मोहित हुन्छन् ।

**सहदेव्या रसेनैव तुलसी बीजचूर्णकम् ।**
**रवौ यस्तिलकं कुर्यात् मोहयेत् सकलं जगत् ॥३॥**

सहदेवीको रसमा तुलसीका गेडा घोटेर आइतबारका दिन तिलक लगाउनाले सबै मानिस मोहित हुन्छन् ।

**मनश्शिलां च कर्पूरं पेषयेत् कदलीरसैः ।**
**तिलकं मोहनं नृणां नान्यथा मम भाषितम् ॥४॥**

मनशिला र कपूर मिलाई केलाको रसमा घोटेर त्यसको तिलक लगाउनाले निश्चय नै सबैजना मोहित हुन्छन् ।

हरितालं चाश्वगन्धां पेषयत् कदलीरसैः ।
गोरोचनेन संयुक्तं तिलकं लोक मोहनम् ॥५॥

हरिताल, अश्वगन्धा र गोरोचनलाई केराको रसमा घोटी तिलक लगाउनाले सबै मोहित हुन्छन् ।

श्रृङ्गीचन्दन संयुक्तं वचाकुष्टसमन्वितम् ।
धूपं देहे तथा वस्त्रे मुखे दद्यात् विशेषतः ॥६॥
पशुपक्षिप्रजानां च राजमोहनकारकम् ।
ताम्बूलमूलतिलकं लोकमोहनकारकम् ॥७॥

कर्कटशृङ्गी, चन्दन, बोझो र कुट मिसाएर यसको धूप कपडा, शरीर, मुख आदिमा दिनाले मोहनशक्ति प्राप्त हुन्छ अर्थात् त्यो मानिसलाई देखेर राजा, मानिस तथा पशुपंक्षी आदि जीव पनि मोहित हुन्छन् । पानको जराको तिलक पनि मोहकारी हुन्छ ।

सिन्दूरं च वचा श्वेतं ताम्बूलरसपेषिता ।

अनेनैव तु मन्त्रेण तिलकं लोक मोहनम् ॥८॥

सिन्दूर र बोझो मिसाएर पानको रसमा घोटी मोहनी मन्त्रले मन्त्रेर त्यसको तिलक लगाउनाले सबै मोहित हुन्छन् । मोहनी मन्त्र सिद्ध नगरी यी सबै प्रयोग सिद्ध हुँदैनन्, त्यसैले मोहिनी मन्त्र अवश्य सिद्ध गर्नू ।

अपामार्गो भृङ्गराजो लाजा च सहदेविका ।
एभिस्तु तिलकं कृत्वा त्रैलोक्यं मोहयेन्नरः ॥९॥

दतिवन, भृङ्गिराज, लज्जावती (लाजाको अर्थ भुटेको अनाज हो तर यहाँ लज्जावती लगाइएको छ) र सहदेवी मिसाई घोटेर मोहनी मन्त्रले मन्त्रेर तिलक लगाउनाले सबै मानिस मोहित हुन्छन् ।

श्वेतदूर्वां गृहीत्वा तु हरितालं च पेषयेत् ।
कृतं तु तिलकं भाले दर्शनान्मोहनकारकम् ॥१०॥

सेतो दूबो र हरिताल मिसाई पिसेर मोहनी मन्त्रले मन्त्री त्यसको तिलक लगाउनाले सबै मानिस मोहित हुन्छन् ।

**बिल्वपत्रं गृहीत्वा तु छायाशुष्क तु कारयेत् ।**
**कपिला पयसा युक्तं वटीं कृत्वा तु गोलकीम्॥**
**एभिस्तु तिलकं कृत्वा मोहयेत् सर्वतो जगत्॥११॥**

बेलका पातलाई राम्ररी छायामा सुकाएर कैली गाईको दूधमा पिसी गोली बनाउनू । यो गोलीलाई मोहनी मन्त्रले मन्त्री तिलक लगाउनाले संसार नै मोहित हुन्छ ।

मोहन मन्त्रः-

**ॐ उड्डामरेश्वराय सर्वजगन्मोहनाय अं आं इं ईं उं ऊं ऋं ॠं फट् स्वाहा॥**

यो मन्त्र एक लाख पटक जप गरेपछि सिद्ध हुन्छ । सिद्ध भएको मन्त्रले अभिमन्त्रित गरिएका प्रयोग मात्र सफल हुन्छन् ।

**इति उड्डीशतन्त्रे रावण-शिव सम्वादे मोहन प्रयोग वर्णनो नाम तृतीयः पटलः॥३॥**

# अथ चतुर्थः पटलः

(चौथो खण्ड)

## स्तम्भन प्रयोग

**अथाग्रे सम्प्रवक्ष्यामि प्रयोगं स्तम्भनाभिधम् ।**
**यस्य साधन मात्रेण सिद्धिः करतले भवेत् ॥१॥**

(भगवान् शिव रावणसँग भन्नुहुन्छ कि हे रावण !) अब यसपछि म स्तम्भनको प्रयोगका बारेमा बताउँदछु, ध्यान दिएर सुन । यो साधना गर्नाले हातमा सिद्धि प्राप्त हुन्छ ।

### जलस्तम्भन

**तत्रादौ कथयिष्यामि जलस्तम्भनमुत्तमम् ।**
**कुलीरनेत्रदंष्ट्राश्च रुधिरं मांसमेव च ॥२॥**
**हृदयं कच्छपस्यैव शिशुमारवसा ततः ।**
**बिभीतकस्य तैलेन सर्वाण्येकत्र सिद्धयेत् (कारयेत्) ॥३॥**
**एभिः प्रलेपनं कुर्याज्जले तिष्ठेद्यथासुखम् ।**
**उरगस्य वसा ग्राह्या नक्रस्य नकुलस्य च ॥४॥**
**डुण्डुभस्य शिरोग्राह्यं सर्वाण्येकत्र कारयेत् ।**
**बिभीतकस्य तैलेन सिद्धं कुर्याद्यथाविधि ॥५॥**
**तैलं पक्त्वाऽयसे पात्रे कृष्टाष्टम्यां समाहितः ।**
**शङ्करस्यार्चनं कृत्वा मूर्ध्नि कृत्वा प्रदक्षिणाम् ॥६॥**
**अष्टाधिकसहस्रेण चाज्यं होमं ततश्चरेत् ।**
**लेपं कृत्वाऽथ मन्त्रेण ततः सिद्धिः प्रजायते ॥७॥**

अब सर्वप्रथम जल-स्तम्भनका बारेमा बताउँदछु सावधान भएर सुन । गँगटाको खुट्टा, दाँत र रगत; कछुवाको मुटु (कलेजो), सौँसको बोसो र भलायोको तेल बराबर मात्रामा मिसाई पकाउनू । तेल तयार भएपछि शरीरमा दल्नाले मानिस पानीमाथि सुखपूर्वक बस्न सक्दछ अर्थात् डुब्दैन । सर्प, नक्र गोही र न्याउरीमुसोको बोसो तथा डुण्डुभ नामक सर्पको टाउको एक ठाउँमा हाली तेलमा पकाउनू । पाकेपछि एउटा फलामको भाँडामा राख्नू । पछि कृष्णपक्षको अष्टमी तिथिमा शिव भगवान्को पूजा र नमस्कार

पछि स्तम्भन मन्त्रले एक हजार आठ पटक शङ्कर भगवानका नाममा घिउको होम हाल्नू । यसपछि स्तम्भन मन्त्र पढ्दै उक्त तेल शरीरमा दल्नाले जलमाथि आनन्दसँग बस्न सक्दछ वा हिँडडुल गर्न सक्दछ । यही प्रयोगलाई शिवको आशिर्वादले सफलतापूर्वक सिद्ध गरी प्राचीन महात्माले बढिरहेका नदीहरू तरेर चमत्कार देखाएका थिए ।

### अग्निस्तम्भन

**मण्डूकस्य वसा ग्राह्या कर्पूरेणैव संयुता ।**
**लेप मात्राच्छरीराणामग्निस्तम्भं प्रजायते ॥८॥**

भ्यागुताको बोसो र कपूर मिसाएर लेप बनाई शरीरमा दलेपछि आगोमा शरीर डढ्दैन अर्थात् अग्नि स्तम्भन हुन्छ ।

**कुमारी रसलेपेन किञ्चित् वस्तु न दह्यते ।**

**अग्निस्तम्भनयोगोऽयं नान्यथा मम भाषितम् ॥९॥**

घिउकुमारीको रसको लेप दल्नाले कुनै पनि वस्तु आगोमा जल्दैन, अग्नि स्तम्भन हुन्छ । यो मेरो वचन हो, यसमा कुनै अन्यथा हुँदैन ।

**स्तम्भन मन्त्रः-**

**ॐ नमो भगवते जलं स्तम्भय स्तम्भय हुँ फट् स्वाहा ॥१०॥**

यो मन्त्र एक लाख पटक जप गर्नाले सिद्ध हुन्छ । मन्त्र सिद्ध भएपछि मात्र प्रयोग गर्नू ।

### आसन स्तम्भन

**श्वेतगुञ्जाफलं क्षिप्त्वा नृकपाले तु मृत्तिकाम् ।**

**बलिं दत्त्वा तु दुग्धस्य तस्य वृक्षो भवेत् यदा ॥११॥**
**तस्य शाखा लताग्राह्या यस्याग्रे तां विनिक्षिपेत् ।**
**तस्य स्थाने भवेत् स्तम्भः सिद्धयोगः उदाहृतः ॥१२॥**

मरेका मानिसको खोपडीमा माटो भरी त्यसमा सेतो रातीगेडीको बीज रोप्नू । जबसम्म उम्रेर लहरा बन्दैन तबसम्म गाईको दूधले सेचन गरिरहनू । यसपछि यसका हँगा भाँचेर जसका अगिल्तिर राखिन्छ उसको आसन स्तम्भन हुन्छ । यस एक सिद्ध प्रयोग हो ।

**आसन स्तम्भन मन्त्रः -**

**ॐ नमो दिगम्बराय अमुकस्य आसनं स्तम्भनं कुरु कुरु स्वाहा ॥**

यो मन्त्र दश हजार पटक जप गरेपछि सिद्ध हुन्छ र सिद्ध भएपछि पनि एक हजार पटक जप गरेर मात्र प्रयोग गर्नुपर्दछ ।

**बुद्धि स्तम्भन**



**उलूकस्य कपेर्वापि ताम्बूले यस्य दापयेत् ।**
**विष्टां प्रयत्नतस्तस्य बुद्धिस्तम्भः प्रजायते ॥१३॥**

लाटोकोसेरोको वा बाँदरको दिसा यत्नपूर्वक जसलाई पानमा मिसाएर खुवाइन्छ उसको बुद्धि स्तम्भन हुन्छ ।

**हतियार स्तम्भन**

**पुष्यार्केऽह्नि समादाय खरमञ्जरीमूलकम् ।**
**पिष्ट्वा लिपेच्छरीरेषु शस्त्रस्तम्भः प्रजायते ॥१४॥**

पुष्य नक्षत्रको सङ्क्रान्तिमा दतिवनको जरा खनेर लेराई घोटेर त्यसको लेप शरीरमा दल्नाले हतियार-स्तम्भन हुन्छ अर्थात् जतिसुकै चोखा वा बलिया हतियारले पनि शरीरमा घाउ बनाउन सक्दैनन् ।

**खर्जूरी मुखमध्यस्थः कटिवद्धा च केतकी ।**

## भुजदण्डस्थिते चार्के सर्वशस्त्रनिवारणम् ॥१५॥

मुखको बीचमा खजूरको, कमरमा केतकीको र पाखुरामा आँकको जरा बाँध्नाले अनेक थरी हतियारबाट मानिसलाई जोगाउँदछ ।

**गृहीत्वा रविवारे तु बिल्वपत्रं च कोमलम् ।**
**लेपः शस्त्रस्तम्भकश्च पिष्ट्वा विषसमं तथा ॥१६॥**

आइतबारका दिन टिपिएका बेलका कमला पात र कमलको डाँठ बराबर मात्रामा मिसाएर पिसी शरीरमा लेप बनाएर दल्नाले हतियार स्तम्भन हुन्छ ।

**अथ शस्त्रस्तम्भन मन्त्रः-**

**ॐ नमो अघोररूपाय शस्त्रस्तम्भनं कुरु कुरु स्वाहा ॥**

(यो मन्त्र दश हजार पटक जप गर्नाले सिद्ध हुन्छ । मन्त्र सिद्ध नभई गरिएको प्रयोग सफल हुँदैन) ।



**मेघस्तम्भनम्**

**इष्टकाद्वयमादाय सम्पुटं कारयेन्नरः ।**
**चिताङ्गारेण संलेख्य भूस्थं स्तम्भनमेघकम् ॥१७॥**

चिताको अँगारबाट दुईवटा ईँटा बनाई त्यसमाथि मेघ लेखी स्तम्भन मन्त्रले मन्त्री पृथ्वीमा गाड्नाले मेघस्तम्भन हुन्छ अर्थात् बादल एकैठाउँमा रोकिएर पानी पार्दछ ।

**निद्रास्तम्भनम्**

**मधुना बृहतीमूलैरञ्जयेल्लोचनद्वयम् ।**
**पिष्ट्वा वा तस्य नस्येन निद्रास्तम्भं भवेद् ध्रुवम् ॥१८॥**

बिहीँको जरालाई महमा पिसी स्तम्भन मन्त्रले मन्त्रेर नस हाल्नाले अथवा दुवै आँखामा गाजल लगाउनाले अवश्य नै निद्रास्तम्भन हुन्छ अर्थात् निद्रा आउँदैन ।

**मूलं गृहीत्वा मधुकं पिष्ट्वा नस्यं समाचरेत् ।**
**मधुना बृहती मूलैरञ्जयेल्लोचन द्वयम् ॥१८॥ (ख पुस्तकमा)।**

जेठीमधुको जरा पिसेर नस लिने हो भने निद्रा आउँदैन । मह र बिहीँ बेस्सरी घोटेर आँखामा लगाउने हो भने निद्रा स्तम्भन हुन्छ ।

**गाईभैँसी स्तम्भन**

**उष्ट्रस्यास्थि चतुर्दिक्षु निखनेद् भूतले ध्रुवम् ।**
**गोमहिष्यादिकस्तम्भे सिद्धयोग उदाहृतः ॥१९॥**

गाईभैँसी आदिको गोठमा चारै तिर भुइँ खोस्रेर उँटको हाड गाडिदिनाले गाईभैँसी आदि अवश्य नै स्तम्भन हुन्छन् । यो सिद्ध प्रयोग हो शङ्का गर्न पर्दैन ।

**उष्ट्रलोमं गृहीत्वा तु पशूपरि विनिक्षिपेत् ।**
**पशूनां भवति स्तम्भः सिद्धयोग उदाहृतः ॥२०॥**



पशुमाथि उँटको रौँ हाल्नाले पनि पशुस्तम्भन हुन्छ । यो पनि सिछ प्रयोग हो ।

**अनुहार स्तम्भन**

**हरितालरसेनैव रविपत्रं रमालिखेत् ।**
**अस्य नामोद्यानमध्ये ईशाने स्थापयेत्ततः ॥**
**मुखस्तम्भनकं तस्य नान्यथा मम भाषितम् ॥२१॥**

आँकको पातमा हरितालको मसीले जसको नाम लेखेर बगैँचाको ईशान दिशामा गाडिन्छ त्यसको अनुहार स्तम्भन हुन्छ । मैले भनेको कहिल्यै झुटो हुँदैन ।

**सैन्यस्तम्भन**

**रविवारे गृहीत्वा तु श्वेतगुञ्जाफलं शुभम् ।**
**निखनेच्च श्मशाने वै पाषाणं तत्र दापयेत् ॥२२॥**
**अष्टौ च (अष्टानां) योगिनी पूज्यारौद्री माहेश्वरी तथा ।**

वाराही नारसिंही च वैष्णवी च कुमारिका ॥२३॥
लक्ष्मी ब्राह्मी च सम्पूज्या गणेशो बटुकस्तथा ।
क्षेत्रपालः सदापूज्यः सैन्यस्तम्भो भविष्यति ॥२४॥
पृथक्पृथग् बलिं दत्वा दशानामविभागतः (दशनामाभिधानतः) ।
मद्यं मांसं (मद्यमांसं) तथा पुष्पं धूपं दीपावली (दीपं बली) क्रिया ॥२५॥

आइतबारका दिन सेतो रातीगेडीको फल लगी मसानमा गाडेर त्यसमाथि एउटा ढुङ्गा राखी थिच्नू । अनि आठ योगिनी रौद्री, माहेश्वरी, वाराही, नारसिंही, वैष्णवी, कुमारी, लक्ष्मी, ब्रह्माणी तथा गणेश, वटुक भैरव, क्षेत्रपाल अनि दशदिक्पाललाई चन्दन, फूल, धूप, दीप आदिले पूजा गरी बेग्लाबेग्लै मदिरा र मासुको बलि दिनू । अनि स्तम्भन मन्त्र दश हजार पटक जप गर्नू । यसबाट शत्रुका सेना स्तम्भन हुन्छ । यो मन्त्र दश जार पटक जपेपछि सिद्ध हुन्छ । कलियुगमा भने यसको चौबर अर्थात् चालीस हजार पटक जप गरेपछि सिद्ध हुन्छ ।

**सैन्यस्तम्भन मन्त्र**

ॐ नमः कालरात्रित्रिशूलधारिणी मम शत्रुसैन्यस्तम्भनं कुरु कुरु स्वाहा ॥



**सेना भगाउने विधि**

भौमवारे गृहीत्वा तु काकोल्रूकस्य (काकोल्रूकौ) तु पक्षकौ ।
भूर्जपत्रे लिखेन्मन्त्रं शत्रु नाम समन्वितम् ॥२६॥
गोरोचनं गले बध्वा काकोल्रूकस्य पक्षकौ ।
सेनानी सन्मुखं गच्छेन्नान्यथा ममभाषितम् ॥२७॥
शब्दमात्रं सैन्यमध्ये पलायन्ते सुनिश्चितम् ।
राजा प्रजाजनश्चापि (प्रजा गजश्चापि) नान्यथा मम भाषितम् ॥२८॥

मङ्गलबारका दिन काग र लाटोकोसेरोको प्वाँखले भोजपत्रमा गोरोचनलाई मसी बनाएर त्रशुको नाम सहति पलायन मन्त्र लेख्नू । अनि यसलाई भोजपत्रकै जन्तर बनाएर गलामा बाँध्नू । उ जुन सेनाका अगिल्तिर गएर बोल्दछ उसका कुरा वा शब्दले नै राजा, प्रजा सेनासहित भाग्दछन् । यसमा कुनै शङ्का छैन ।

**पलायनमन्त्रः-**

**ॐ नमो भयङ्कराय खड्गधारिणे मम शत्रुसैन्यपलायनं कुरु कुरु स्वाहा ।**

इति उड्डीशतन्त्रे रावण-शिवसम्वादे चतुर्थः पटलः ॥४॥

## अथ पञ्चमः पटलः

(पाँचौं अध्याय)

## विद्वेषण

### शिव उवाच

**अथातः सम्प्रवक्ष्यामि योगं विद्वेषणाभिधम् ।**
**महाकौतुकरूपं च श्रृणु रावण ! यत्नतः ॥१॥**

शिव भगवान् भन्नुहुन्छ- हे रावण ! अब यसपछि म अती अचम्मका विद्वेषण विधिका बारेमा बताउँदछु, तिमी ध्यान दिएर सुन ।

विद्वेष बढाउने प्रयोग

**गजदन्तं गृहीत्वा च सिंहदन्तं तथैव च ।**
**पेषयेन्नवनीतेन तिलकं द्वेषकारकम् ॥२॥**



हात्तीको र सिँहको दाँतको धुलोलाई नौनीमा हाली हातले पिसेर विद्वेषण मन्त्रले मन्त्री तिलक लगाउनाले स्वतः विद्वेषण हुने गर्दछ ।

**एकहस्ते काकपक्षमुलूकस्य करेऽपरे ।**
**मन्त्रयित्वा मेलयित्वा कृष्णसूत्रेण वेष्टयेत् ॥३॥**

एउटा हातमा कागको र अर्को हातमा लाटोकोसेरोको प्वाँख लिई दुवैलाई विद्वेषण मन्त्रले मन्त्री दुवैलाई एकै ठाउँमा राखी कालो धागोले बाँध्नू ।

**अञ्जलीं च जले चैव तर्पयेत् हस्तपक्षकः ।**
**एवं सप्तदिनं कुर्यादष्टोत्तरशतं जपेत् ॥४॥**

यसपछि ती दुवै प्वाँखलाई हातले समाएर जलले तर्पण दिनू । यसरी सात दिनसम्म विद्वेषण मन्त्र पढी एक सय आठ पटक तर्पण गर्नू । यसो गर्नाले स्वतः विद्वेषण हुन्छ ।

**गृहीत्वा गजकेशं च सिँहकेशं तथैव च ।**
**गृहीत्वा पादपांसुं च पुत्तलिं निखनेद्भुवि ॥५॥**

**अग्निस्तस्योपरि स्थाप्यो मालतीकुसुमं हुनेत् ।**
**विद्वेषं कुरुते नूनं नान्यथा च मयोदितम् ॥६॥**

जसमाथि विद्वेषण गरिने हो उसको पैतालाले कुल्चेको माटो लेराएर त्यसले एउटा पुत्ला बनाउनू । त्यो पुत्लालाई हात्ती र सिँहको रौंले बेरी जमिनमा गाड्नू । त्यसमाथि वेदी बनाई चमेली फूलले विद्वेषणमन्त्र पढी होम गर्नू । यसबाट अवश्य नै विद्वेषण हुनेछ ।

**ब्रह्मदण्डी समूला च काकजङ्घा समन्विता ।**
**जातिपुष्परसैर्भाव्या सप्तरात्रं पुनः पुनः ॥७॥**
**ततो मार्जारमूत्रेण सप्ताहं भावयेत् पुनः ।**
**एष धूपः प्रदातव्यो शत्रुगोत्रस्य मध्यतः ॥८॥**
**यथा गन्धं समाघ्राति तथा सर्वैः समं कलिः ।**
**महद्विद्वेषणं याति सुहृद्भिर्बान्धवैः सह ॥९॥**

फल, पात आदिमा काँडा हुने एक जङ्गली बुटी (ब्रह्मदण्डी) को जरासहित र काकजङ्घालाई सात दिनसम्म चमेलीको फूलको रसमा भिजाएर निकाली पुनः सात दिनसम्म बिरालोको मूत्रमा भिजाएर राख्नू । यसपछि यसलाई लगेर शत्रुको घरका नजिकै धूप हाल्नाले जसले यो धूपको बास्ना सुँघ्दछ उसलाईअवश्य नै विद्वेषण हुन्छ ।



**गजकेसरिणो दन्तान्नवनीतेन पेषयेत् ।**
**यन्नाम्ना हूयते चाग्नौ तयोर्विद्वेषणं भवेत् ॥१०॥**

हात्तीको दाँतलाई नौनीमा पिसेर त्यसमा सिँहको दाँतको धुलो मिसाई  त्यसले शत्रुको नाम लिँदै विद्वेषण मन्त्रले अग्निमा होम हाल्नाले पनि उसलाई विद्वेषण हुन्छ ।

**गृहीत्वा माहिषं केशमश्वकेशेन संयुतम् ।**
**सभायां दीयते धूपो विद्वेषो जायते क्षणात् ॥११॥**

भैंसी र घोडाको रौं मिसाएर जुन सभामा लगी धूप हालिन्छ त्यो सभामा एकछिनमै विद्वषण हुन्छ । यो प्रयोग मन्त्र बिना नै सिद्ध हुन्छ यसमा शङ्का नगर्नू ।

**मार्जार्या मूषिकायाश्च विष्ठामादाय यत्नतः ।**
**विद्वेष्य पादतलयोर्मृदमादाय मेलयेत् ॥१२॥**

**जपेन्मन्त्रशतं कुर्यान्नरपुत्तलिकां शुभाम् ।**
**नीलवस्त्रेण संवेष्ट्य तद्गृहे निखनेद्यदि ॥१३॥**
**विद्वेषो जायते शीघ्रं बन्धूनां पितृपुत्रयोः ॥१४॥**

जसलाई विद्वेषण गर्नुपर्ने हो उसले कुल्चेको माटो लेराई त्यसमा बिरालाको दिसा मिसाउनू र पुत्ला बनाउनू । त्यो पुत्लालाई नीलो कपडामा बेरी विद्वेषण मन्त्रले मन्त्रनु र लगी उसैका घरमा गाडिदिनू । यसपछि निश्चय नै चाँडै सो परिवार सहित नै विद्वेषण हुन्छ ।

**एकहस्ते काकपक्षमुलूकस्य करे परे ।**
**मन्त्रयित्वा मेलयित्वा कृष्णसूत्रेण वेष्टयेत् ॥१५॥**
**यद्गृहे निखनेद्भूमौ विद्वेषस्तस्य जायते ।**
**पुनश्च सुस्थीकरणं घृतगुग्गुलुधूपतः ॥१६॥**

एउटा हातमा कागको र अर्को हातमा लाटोकोसेरोको प्वाँख लिनू र विद्वेषण मन्त्रले मन्त्रनू । अनि दुवै एकै ठाउँमा राखी कालो धागोले बाँध्नू । यो लगेर जसलाई विद्वेषण गरिने हो उसका घरमा लगी गाड्नू । यसबाट बाउ र छोराका बीचमा विद्वेषण हुन्छ । यसलाई शान्त पार्नु छ भने त्यसलाई निकाली गोकुलधूपको धूप दिनू, पहिले जस्तै शान्ति हुन्छ ।



**विद्वेषणमन्त्रः-**

**ॐ नमो नारायणाय अमुकस्य अमुकेन सह विद्वेषणं कुरु कुरु स्वाहा ॥**

यो मन्त्रमा अमुक भनेका ठाउँमा प्रयोग गरिने मानिसको नाम लिनू । यो मन्त्र एक लाख पटक जप गरेपछि सिद्ध हुन्छ । मन्त्र सिद्ध नगरी प्रयोग गर्नु हुँदैन ।

**इति उड्डीशतन्त्रे रावण-शिवसम्वादे विद्वेषणप्रयोगवर्णनं नाम पञ्चमः पटलः ॥५॥**

## अथ षष्ठः पटलः

(छैटौं अध्याय)

## उच्चाटनम्

**ईश्वर उवाच**

**येन हृतं गृहं क्षेत्रं कलत्रं धनपुत्रकम् ।**
**उच्चाटनं वधं कुर्यात् श्रृणु रावण यत्नतः ॥१॥**

शिव भगवान् भन्नुहुन्छ- हे रावण ! अब म उच्चाटन विधिका बारेमा बताउँदछु, तिमी ध्यान दिएर सुन । यो प्रयोग घर, जग्गा, स्त्री र धन हडप्नेका लागि मात्र गर्नुपर्दछ अरुका लागि गर्दा पाप लाग्दछ ।

**श्वेतलाङ्गलिकामूलं स्थापयेद्यस्य वेश्मनि ।**
**निखनेत्तु भवेत्तस्य सद्य उच्चाटनं ध्रुवम् ॥२॥**

सेतो कलिहारीको जरालाई उच्चाटन मन्त्रले मन्त्रिएर उच्चाटन गरिने व्यक्तिको घरमा गाडिदिनाले उसको उच्चाटन चाँडै हुन्छ ।



**ब्रह्मदण्डी चिताभस्म शिवलिङ्गे प्रलेपयेत् ।**
**सिद्धार्थेन च संयुक्तं शनिवारे क्षिपेद्गृहे ॥३॥**
**उच्चाटनं भवेत्तस्य जायते मरणान्तिकम् ।**
**विना मन्त्रेण सिद्धिश्च सिद्धियोगः उदाहृतः ॥४॥**

शिवलिङ्गमा फल, पात आदिमा काँडाहुने एक जङ्गली बूटी (ब्रह्मदण्डी), चिताको खरानी र सेतो सर्सिउँ समेत लगी शनिबारका दिन जसका घरमा फालिन्छ उसको उच्चाटन हुन्छ, यसमा कुनै शङ्का छैन ।

**गृहीत्वोदुम्बरं कीलं मन्त्रेण चतुरङ्गुलम् ।**
**निखनेद्यस्य शयने तस्योच्चाटनं भवेत् ॥५॥**

उच्चाटन गरिने व्यक्ति सुत्ने स्थानमा डुम्रीको चार अमल लामो किला लगी उच्चाटन मन्त्रले मन्त्रिएर गाडिदिनाले उसको उच्चाटन हुनेछ ।

**काकोलूकस्य पक्षस्य यद्गृहे निखनेत् रवौ ।**
**यन्नाम्ना मन्त्रयोगेन समस्तोच्चाटनं भवेत् ॥६॥**

जसमाथि उच्चाटन गर्नुपर्नेछ उसको नाम सहित काग र लाटोकोसेरोको प्वाँखलाई उच्चाटन मन्त्रले मन्त्री उसका घरमा गाडिदिनाले निश्चय नै उसको उच्चाटन हुन्छ ।

**नरास्थिकीलकं भौमे निखनेच्चतुरङ्गुलम् ।**
**तत्र मूत्रं स्वयं कुर्यात् तस्योच्चाटनकं ध्रुवम् ॥७॥**

मानिसको हाडलाई मङ्गलबारका दिन चार अमलको किलो बनाई उच्चाटन मन्त्रले मन्त्रिएर गाडिएको स्थानमा जसले पिसाब गर्दछ उसको उच्चाटन हुन्छ ।

**सिद्धार्थं शिवनिर्माल्यं निखनेद्यो गृहेजलम् ।**
**उच्चाटनं भवेत्तस्य उद्धृते च पुनः सुखी ॥८॥**

शिव भगवान्लाई चढाइएको प्रसाद वा जल र सेतो सर्सिउँ निम्नलिखित मन्त्रले मन्त्री जसका घरमा खाल्डो खनी गाडिन्छ उसलाई उच्चाटन हुन्छ । जब यसलाई निकालेर फालिन्छ तब पहिले जस्तै सुख हुन्छ ।

**उच्चाटन मन्त्रः-**

**ॐ नमो भगवते रुद्राय करालदंष्ट्राय अमुकं पुत्रबान्धवैः सह हन हन दह दह पच पच शीघ्रं उच्चाटय उच्चाटय हुँ फट् स्वाहा ।**

यो मन्त्र दश हजार पटक जप गर्नाले सिद्ध हुन्छ । सिद्ध भएपछि मात्र मन्त्रको प्रयोग गर्नू ।

**मध्याह्ने लुण्ठते भूमौ गर्दभो यत्र धूलिकाम् ।**
**उदङ्मुखे प्रतीच्यां तु गृहीत्वा वामपाणिना ॥९॥**
**यद्गृहे क्षिप्यते धूली तस्योच्चाटनकं भवेत् ।**

**एवं सप्तदिनं कुर्यात् गृहेशोच्चाटनं भवेत् ॥१०॥**

जहाँ दिउस बाह्र बजे गधा सुतेको हुन्छ त्यो ठाउँको माटो पूर्व वा पश्चिम फर्केर लिनू । त्यसलाई उच्चाटन मन्त्रले मन्त्री जसका घरमा फालिन्छ उसलाई उच्चाटन हुन्छ । यसरी सात दिन गर्नाले त्यो घरको मालिकलाई उच्चाटन हुन्छ ।

**मन्त्रः-**

**ॐ नमो भीमस्याय अमुकगृहे उच्चाटनं कुरु कुरु स्वाहा ॥**

यो मन्त्रमा अमुक भनेका स्थानमा उच्चाटन गरिने व्यक्तिको नाम लिनू । सिद्ध नगरी मन्त्रको प्रयोग नगर्नू ।

**इति उड्डीशतन्त्रे रावण-शिवसम्वादे उच्चाटनप्रयोगवर्णनो नाम षष्ठः पटलः ॥६॥**

## अथ सप्तमः पटलः
## वशीकरणम्
### ईश्वर उवाच

**अथाग्रे कथयिष्यामि वशीकरणमुत्तमम् ।**
**राजाप्रजापशूनां च श्रृणु रावण ! यत्नतः ॥१॥**

शिव भगवान् भन्नुहुन्छ-हे रावण ! अब म राजा प्रजा र पशु वशमा पार्ने उत्तम प्रयोग विधि बताउँदछु, तिमी ध्यान दिएर सुन । यसको प्रयोगबाट साधकलाई सबै खालका सिद्धिहरू प्राप्त हुन्छन् ।

**प्रियङ्गु तगरं कुष्ठं चन्दनं नागकेशरम् ।**
**धत्तूरस्य च पञ्चाङ्गं समभागं तु कारयेत् ॥२॥**
**छायायां वटिका कार्या प्रदेया खानपानयोः ।**
**पुरुषो वाथ नारी च यावज्जीवं वशं नयेत् ॥**
**सप्ताहं मन्त्रितं कृत्वा मन्त्रेणानेन मन्त्रवित् ॥३॥**

**एक चित्तस्थितो मन्त्री जपेन्मन्त्रमतन्द्रितः ।**
**त्रिंशत् सहस्रसङ्ख्याकं सर्वलोकवशं करम् ॥४॥**

दहीगुयँलो, तगर, कूट, रक्तचन्दन, नागकेशर र धतुरोका जरा-डाँठ-पात-फूल-फल बराबर मात्रामा लिई पिसेर गोली बनाउनू । यसलाई छायामा सुकाउनू र निम्नलिखित वशीकरण मन्त्र पढी ती गोलीलाई सात पटक मन्त्रनू । यो गोली जुन पुरुष वा स्त्रीलाई खुवाइन्छ उ आजीवन आफ्नो वशमा हुन्छ ।

**वश्यमन्त्रः- ॐ नमो भगवते उड्डामरेश्वराय मोहय मोहय मिलि ठः ठः स्वाहा ।**

यो मन्त्र एकाग्र मनले तीस हजार पटक जप गर्नाले सिद्ध हुन्छ । यो मन्त्रले मन्त्रेर वश्य विधिको प्रयोग गर्नाले सफलता प्राप्त हुन्छ ।

**बिल्वपत्राणि सङ्गृह्य मातुलुङ्गं तथैव च ।**
**अजादुग्धेन सम्पेष्य तिलकं लोकवश्यकृत् ॥५॥**

बेलका पात र बिमिरोलाई बाख्राको दूधमा पिसेर वशीकरण मन्त्रले मन्त्री तिलक लगाउनाले सबै मानिस आफ्ना वशमा हुन्छन् ।

**कुमारीकन्दमादाय विजया बीजसंयुतम् ।**
**मस्तके तिलकं कुर्यात् वशीकरणमुत्तमम् ॥६॥**

घिउकुमारीके जरा र भाङका गेडा मिसाई वशीकरण मन्त्रले मन्त्री तिलक लगाउनाले उत्कृष्ट वशीकरण हुन्छ ।

**गोरोचनं वंशनेत्रं मत्स्यपित्तं च कुङ्कुमम् ।**
**चन्दनं काकजङ्घां च मूलं भागसमं नयेत् ॥७॥**
**वाप्यादिकजले नैव पेषयित्वा कुमारिकाम् ।**
**हस्तेन गुटिकां कृत्वा छायायां च विशेषयेत् ॥८॥**
**ललाटे तिलकं कुर्यात् यः पश्यति (स) वशी भवेत् ।**
**राजद्वारे न्याययुद्धे सर्वत्र विजयी भवेत् ॥९॥**



गोलोचन, वंशलोचन, माछाको पित्त, केशर, रक्तचन्दन र काकजङ्घको जरा बराबर मात्रामा लिई वापीको जलमाकुमारी केटीको हातले पिस्न लगाउनू र गोली बनाउन लगाउनू । गोलीलाई छायाँमा सुकाएर त्यसको तिलक लगाउनाले उ जसलाई हेर्दछ त्यही उसको वशमा पर्दछ । यो तिलक लगाउने व्यक्ति राजद्वार, अदालत आदि सबैतिर विजयी हुन्छ ।

राजालाई वशमा पार्ने विधि

**कुङ्कुमं चन्दनं चैव रोचनं शशिमिश्रितम् ।**
**गवां क्षीरेण तिलकं राजवश्यकरं परम् ॥१०॥**

गाईको दूधमा कुङ्कुम, रक्तचन्दन, गोरोचन र भीमसेनी कपूर मिसाई वशीकरण मन्त्रले मन्त्रेर तिलक लगाउनाले राजा अवश्य आफ्ना वशमा हुन्छन् ।

मुखस्तम्भन

**चम्पकस्य तु वन्दाकं करे बध्वा प्रयत्नतः ।**
**सङ्गृह्य तु भरण्यऽर्के पुष्यार्के वा विधानतः ॥११॥**
**राजानं तत्क्षणादेव मनुष्यो वशमानयेत् ।**
**करेसौदर्शनं मूलं बध्वा राजप्रियो भवेत् ॥१२॥**

चाँपको मुना (वा चाँपको रूखमा पलाएको ऐँफेरु) लाई भरणीमा वा पुष्यमा सूर्य हुँदा लेराई हातमा बाँध्नाले राजाजन वशमा हुन्छन्, अरुका के कुरा गर्नु ? अथवा उल्लेखित नक्षत्रमा लेराएर जसले सुदर्शना (हाडे लसुन) को जरा हातमा बाँध्दछ उ राजाको प्रिय हुन्छ ।

**वशीकरणमन्त्रः- ॐ ह्रीं सः अमुकं मे वशमानय आनय स्वाहा ॥**

पहिले एक हजार पटक जपेर यो मन्त्रलाई सिद्ध गर्नू पछि सातपटक मन्त्रेर तिलक लगाउनू ।



स्त्रीवशीकरण

**अथातः सम्प्रवक्ष्यामि योगानां सारमुत्तमम् ।**
**यस्य विज्ञान मात्रेण नारी भवति किंकरी ॥१३॥**

हे रावण ! अब यसपछि म सबै योगको सार कुरा बताउँदछु । जसको ज्ञानले मात्र पनि स्त्री सधैँका लागि आफ्ना वशमा हुने गर्दछन् ।

**उशीरं चन्दनं चैव मधुना सह संयुतम् ।**
**गलहस्तप्रयोगोऽयं सर्वनारीप्रसाधकः ॥१४॥**

महमा खसखस र रक्तचन्दन मिसाएर पिसी त्यसको तिलक लगाएर वशमा पार्नुपर्ने स्त्रीलाई अँगालो हाले त्यो स्त्री आफ्नो दासी हुन्छे ।

**चिताभस्म वचा कुष्ठं कुङ्कुमं रोचनं समम् ।**

**चूर्णं स्त्रीशिरसि क्षिप्तं वशीकरणमद्भुतम् ॥१५॥**

चिताको खरानी, बोझो, कूट, केशर र गोरोचन बराबर मात्रामा लिई धुलो बनाएर त्यो धुलोलाई जुन स्त्रीका टाउकामा छर्किइन्छ ती स्त्री अचम्मसँग सदाका लागि आफ्ना वशमा पर्दछिन् ।

**कृष्णोत्पलं मधुकस्य च पक्षयुग्मं मूलं तथा तरगजं (तगरजं) सिकत(सित)काकजङ्घा ।**
**यस्याः शिरोम(ग)तमिदं विहितं विचूर्णं दासीभवेज्झटिति सा तरुणी विचित्रम् ॥१६॥**

नीलकमल, भमराका दुवै प्वाँख, तगरको जरा र सेतो काकजङ्घा बराबर मात्रामा मिसाई पिसेर बनाइएको धुलो जुन स्त्रीका टाउकामा छर्किइन्छ त्यो स्त्री तुरुन्त दासी हुन्छे ।

**सव्येन पाणिकमलेन रतावसाने, यो रेतसा निजभवेन विलासिनीनाम् ।**
**वामं विलिम्पति पदं सहसैव यस्या, वश्यैव सा भवति नात्र विकल्पभावः ॥१७॥**

ग्राम्यधर्ममा संलग्न भएपछि आफ्नो वीर्य आफ्नै बायाँ हातमा लिई स्त्रीको देब्रे पैँतालामा दल्नाले त्यो स्त्री आमरण त्यो पुरुषकी दासी हुन्छे ।



**सिन्धूत्थ(स्थ)माक्षिककपोतमलांश्च पिष्ट्वा लिङ्गं विलिप्य तरुणीं रमते नवोढाम् ।**
**सोऽन्यं नयाति पुरुषं मनसाऽपि नूनं, दासी भवेदतिमनोहरदिव्यमूर्तिः ॥१८॥**

जो मानिस महमा सिँधे नुन र परेबाको सुली मिसाई पिसेर आफ्नो जननेन्द्रियमा लेप बनाई दल्दछ र स्त्रीसँग ग्राम्यधर्ममा संलग्न हुन्छ त्यो स्त्री उसको वशमा पर्दछे र कहिल्यै अर्को पुरुषका नजिक जान मन गर्दिन उसैको दासी हुन्छे ।

**गोरोचना शिशिरदीधितिशम्भुवीर्यैः काश्मीरचन्दनयुतैः कनकद्रवैश्च ।**
**लिख्वा ध्वजं परिरमत्यबलां नरो यां तस्याः स एव हृदये मुकुटत्वमेति ॥१९॥**

जो पुरुष धतुराको रसमा गोरोचन, ठूलोकुरा वा इन्द्रजौ ? (शिशिरदीधिति, हिन्दीमा कुरैया), पारो (शम्भुवीर्य), काश्मिरी केशर र रक्तचन्दन घोटी तयार पारिएको लेप जननेन्द्रियमा दलेर ग्राम्यधर्ममा संलग्न हुन्छ उसकी स्त्री आश्चर्यजनक तरिकाले उसका वशमा हुन्छे ।

### पुरुषको जननेन्द्रियको उपचार

**लघुसूक्ष्मेन लिङ्गेन नैव तुष्यन्ति योषितः ।**
**तस्मात्तत्प्रीतये वक्ष्ये स्थूलीकरणमुत्तमम् ॥२०॥**

पुरुषको छोटो र मसिनो जननेन्द्रियबाट स्त्री सन्तुष्ट हुँदैनन् यसैले तिनले आफ्ना स्त्री सन्तुष्ट पार्न जननेन्द्रियलाई मोटो र लामो बनाउनु पर्दछ । म यसको उपाय बताउँदछु सावधान भएर सुन ।

**कुष्ठस्य मातङ्गबलाबलानां, वचाश्वगन्धा गजपीप्पलीनाम् ।**
**तुरङ्गशत्रोर्नवनीतयोगाल्लेपेन लिङ्गोमुसलत्वमेति ॥२१॥**

कूट, पिप्ला, दुवै थरी बलु, बोझो, अश्वगन्धा, गजपिप्ला र करवीरलाई नौनी हालेर पिसी पुरुषको जननेन्द्रियमा लेप लगाए मुसल जस्तै मोटो र लामो हुन्छ ।



**सलौ(लो)ध्रकाश्मीरतुरङ्गगन्धा, मातङ्गगन्धापरिपाचितेन ।**
**तैलेन वृद्धि खलु याति लिङ्गं, वराङ्गनालोकमनोहरं तत् ॥२२॥**

लोध, केसर, अश्वगन्धा, पिप्ला र शालपर्णी सर्सिउँको तेलमा पकाएर लेप बनाई मालिस गर्नाले पुरुषको जननेन्द्रिय लामो र मोटो हुन्छ ।

**हयारिपत्नीनवनीतमध्ये वचाबलाभागरसामयैश्च ।**
**लेपेन लिङ्गं सहसैव पुंसां लोहोपमं स्यादितिदृष्टमेतत् ॥२३॥**

भैंसीको नौनीमा बोझो, बलु र पारो मिसाएर लेप बनाई दल्नाले पुरुषको जननेन्द्रिय तुरुन्त फलाम जस्तो कडा बन्दछ ।

**भल्लातकास्थिजलशूकमथाब्जपत्रमन्तर्विमर्द्यमतिमान्सहसैन्धवेन ।**

**एतद्विरूढवृहतीफलतोयपिष्टमालेपनं तुरगवद्विमलीकृतेऽङ्गे ॥२४॥**

भलायोको गुदी, सिवाँली (पानी झ्याउ) र कमलको पातलाई पोली सिँधेनुन मिसाएर बिहीँको पानीमा पिस्नू र लेप बनाउनू । यो लेप दल्नाले पुरुषको जननेन्द्रिय घोडाको जस्तो लामो र कडा बन्दछ ।

**वाराहवयसा लिङ्गं मधुना सह लेपयेत् ।**
**स्थूलं दृढं च दीर्घं च मासाल्लिङ्गं प्रजायते ॥२५॥**

सुँगुरको बोसोलाई महमा मिसाएर एक महिनासम्म दल्नाले पुरुषको जननेन्द्रिय मोटो, बलियो र लामो हुन्छ ।

**अश्वगन्धावरी कुष्ठ मांसीं सिंहींफलान्विताम् ।**
**चतुर्गुणेन दुग्धेन तिलतैलं विपाचयेत् ॥२६॥**
**स्तनलिङ्गंकर्णपाणिवर्धनं भक्षणादितः ।**
**तद्वच्च मुसली साज्यालेपाल्लिङ्गस्य दार्ढ्यकृत् ॥२७॥**

**पिप्पली लवणक्षीरसितालेपोऽपि दीर्घकृत् ।**

अश्वगन्धा, कुरिलो, कूट, जटामसी र कण्टकारीके फललाई चौबर दूध र तिलको तेलमा पकाएर यसको लेप दल्नाले तथा यो खानाले स्तन, पुरुष जननेन्द्रिय, कान आदि बढ्दछन् अर्थात् मोटो हुन्छन् । यसैगरी मुसलीकन्दको धुलो घिउमा पकाएर दल्नाले जननेन्द्रिय बलियो हुन्छ । पिप्ला, सिँधेनुन र मिश्रीलाई दूधमा मिसाएर लेप बनाई दल्नाले पनि पुरुषको जननेन्द्रिय लामो हुन्छ ।

**मांसीं वा(वी)क्षफलं कुष्ठमश्वगन्धां शतावरीम् ॥२८॥**
**तैले पक्त्वा प्रलेपेत लिङ्गस्थौल्यं भवेद्ध्रुवम् ।**

जटामसी, बर्रो, कूट, अश्वगन्धा र कुरिलोलाई तेलमा पकाएर लेप बनाई दल्नाले निश्चय नै पुरुषको जननेन्द्रिय मोटो हुन्छ ।

**सूतको ह्यश्वगन्धा च रजनी गजपिप्पली ॥२९॥**

**सिता युक्ता जलैः पिष्ट्वा मासैकं लेपयेत्तदा ।**
**अद्भुतं वर्द्धयेल्लिङ्गं योनिकर्णस्तनानि च ॥३०॥**

पारो, अश्वगन्धा, हलेदो, गजपिप्ला र मिश्रीलाई मिसाएर पानीमा पिसी लेप बनाएर दल्ने गरेमा एक महिनामा पुरुषको जननेन्द्रिय, स्त्रीको जननेन्द्रिय, कान र दूध अचम्मसँग बढ्दछ ।

पतिलाई वशमा पार्ने विधि

**रोचनं मत्स्यपित्तं च मयूरस्य शिखां यथा ।**
**मधुसर्पिः समायुक्तं स्त्रीवराङ्गविलेपनम् ॥३१॥**
**निभृते मैथुने भावे पतिर्दासो भविष्यति ।**
**रूपयौवनसम्पन्ना नान्यामिच्छेत् कदाचन ॥३२॥**

घिउ र महमा गोरोचन, माछाको पित्त र मुजुरको कल्की मिसाई पिसेर आफ्नो जननेन्द्रियमा लेप दली त्यसपछि पतिलाई ग्राम्यधर्ममा संलग्न गराउने स्त्रीको पति दास बन्दछ । उसले जतिसुकै सुन्दरी र तरुनी भएपनि अरू स्त्रीको कहिल्यै चाहना गर्दैन ।



**कुलत्थं (कुलथिं) बिल्वपत्रं च रोचनं च मनःशिला ।**
**एतानि समभागानि स्थापयेत्ताम्रभाजने ॥३३॥**
**सप्तरात्रस्थिते पात्रे तैलमेवं पचेत्ततः ।**
**तैलेन भगमालिप्य भर्तारमनुगच्छति ।**
**सम्प्राप्ते (स प्राप्ते) मैथुने भर्ता दासी(सो)भवति नान्यथा ॥३४॥**

गहत, बेलपत्र, गोरोचन र मनशिला बराबर मात्रामा लिई पिसेर एउटा तामाको भाँडामा हाल्नू । अनि सर्सिउँको तेलमा सानो आगो बालेर सात दिनसम्म पकाउनू । त्यसपछि झिकेर कपडाले छान्नू । यो तेल आफ्नो जननेन्द्रियमा लगाएर पतिसँग सुत्ने स्त्रीको वशमा पति हुन्छन् ।

**प्रियङ्गु शतपुष्पां च कुङ्कुमं वंशरोचनम् ।**
**अश्वमूत्रेण लेपं च पुरुषाणां वशं करम् ॥३५॥**
**निम्बकाष्ठस्य धूपेन धूपयित्वा भगं पुनः ।**

**या नारी रमयेत् कान्तं सा च तं दासतां व्रजेत् (नयेत्) ॥३६॥**

घोडाको मूत्रमा कागुनु, सुप, केशर र वंशलोचन मिसाएर लेप बनाई आफ्नो जननेन्द्रियमा दली नीमका दाउरा बालेर धूप सुँघाउने र त्यसपछि पतिसँग ग्राम्यधर्ममा संलग्न हुने स्त्रीले पतिलाई आफ्नो दास बनाउँदछन् ।

**स्त्रीको तन कठोर बनाउने ओखती**

**एरण्डतैलं शकुलस्य तैलं तथा च बिल्वस्य रसं गृहीत्वा ।**
**सम्मर्दयेदूर्ध्वगहस्तकेन तदास्तनं नोपतितौ कदापि ॥३७॥**

अँडिरको तेल, सौरा माछाको तेल र बेलको रस एकै ठाउँमा मिसाएर स्तनमा दल्नाले स्तन झोल्लिँदैनन् अर्थात् कठोर हुन्छन् । (यो कर्ममा मन्त्रको प्रयोग हुँदैन) ।

**श्रीपर्णीरसकर्काभ्यां तैलं सिद्धातलोद्भवम् (विद्धतिलोद्भवम्) ।**
**तत्तैलं तिलकेनापिस्तनस्योपरि दापयेत् ॥**

**काठिन्यवृद्धतां यातः पतितौ चोत्थितौ च तौ ॥३८॥**

तिलको तेलमा खमारीको रस र कालो बिच्छीलाई पकाएर स्तनमा लेप बनाई दल्नाले स्तन कठोर र ठूला हुन्छन् । अर्थात् झोल्लिएका स्तन पनि उठ्दछन् ।

**वृद्धायाः कन्यकायाश्च त्वबालायाः पयोधरौ ।**
**श्वेतमुस्तसमं कृष्णाधेनोः पयसि संस्थितम् ॥**
**पिष्ट्वा स्तनयुगे देयं भवेत् पीनपयोधरा(रः) ॥३९॥**

कालीगाईको दूधमा सेतो मोथे पिसेर दुवै स्तनमा लेप लगाउनाले बूढी र कन्याका झोल्लिएका स्तन निःसन्देह मोटा हुन्छन् ।

**वचाश्वगन्धासंयुक्ता चाश्वरी पत्रकं तथा ।**
**गजपिप्पलिकायुक्तं सद्योऽमलजलेन च ॥४०॥**
**पेषयित्वा विधानेन लेपयेत्स्तनमण्डले ।**
**नयने तु कदाचिद्वैचाम्रतालफलं तथा ॥४१॥**

स्तन झोल्लिएमा बोझो र अश्वगन्धाको जरा र तिनैको पात तथा गजपिप्ला मिसाएर सफा पानीमा पिस्नू । यो लेप स्तनमा दल्नाले झोल्लिएका स्तन चाँडै आँप वा ताडी जस्ता हुन्छन् ।

**गम्भारिपत्रनीरं च तत् समं तिलतैलकम् ।**
**समानं जलभागं च दत्वा पाकं समाचरेत् ॥४२॥**
**तैलशेषं परिज्ञाय वस्त्रेण शोधयेत् कुचौ ।**
**दिवा प्रलेपनादेव लोहत्वं जायते चिरात् ॥४३॥**

खमारीका पातको रस निकाल्नू र त्यो रस बराबर तिलको तेल लिनू । यी दुई कुरा मिसाउँदा जति हुन्छ त्यति नै सफा पानी यसमा मिसाउनू । यसपछि यसलाई मन्द आँचमा पकाउनू । जब पानी जति सबै सुकेर तेल मात्र बाँकी रहन्छ तब आगोबाट झिकी सेलाएपछि कपडाले छान्नू । स्त्रीले यो तेल एक दिन मात्र (झोल्लिएका) स्तनमा दल्दा पनि सधैँका लागि वा लामो समयका लागि ती स्तन फलाम समान कडा हुन्छन् अर्थात् झोल्लिएको स्तन ठिक हुन्छ ।

### सहवासकालमा पति सन्तुष्ट पार्ने विधि

**प्रक्षालयेन(त्) निम्बकषायतोयैर्निशाज्यकृष्णागरुगुग्गुलूनाम् ।**
**धूपेन योनिं निशि धूपयित्वा नारी प्रमोदं विदधाति भर्तुः ॥४४॥**

नीमको टर्रो पानीले आफ्नो जननेन्द्रिय धोई रातमा नीम, हलेदो, घिउ, कालो धूपी र गोकुल धूप बाली धूप दिएर जो स्त्री पतिसँग ग्राम्यधर्ममा संलग्न हुन्छिन् तिनले पतिलाई प्रसन्न पार्दछिन् ।

### स्त्री जननेन्द्रियको गन्ध हटाउने ओखती

**प्रक्षाल्य निम्बस्य जलेन भूयः तस्यैव कल्केन विलेपयेच्च ।**
**त्यजेयुरत्याश्चिरकाद्भूतं गन्धम्बराङ्गस्य न संशयोऽत्र ॥४५॥**

जननेन्द्रिय दुर्गन्धित हुने स्त्रीले नीम-पानीले जननेन्द्रिय पखाली नीमकै कमला पात पिसेर लेप बनाई दल्नू । यसो गर्नाले लामो समयसम्म दुर्गन्ध आउँदैन, यसमा शङ्का नगर्नू ।

### रौँ खुइल्याउने ओखतीहरू

**पलाशभस्म हडितालचूर्णे रम्भाम्बुमिश्रैरूपलिप्यभूयः ।**
**कन्दर्पगेहे मृगलोचनीनां रोमाणि रोहन्ति कदापि नैव ॥४६॥**

पलाँशको पातको र हरितालको खरानीलाई केराको रसमा मिसाई जननेन्द्रिय वरिपरि रौँ भएका स्थानमा दल्नाले रौँ सफा हुन्छ र फेरी उम्रदैन ।

**एक प्रदेयो हरितालभागः पञ्च प्रदेयो जलजस्य भागः ।**
**सवस्तरोर्भस्मनएव पञ्च प्रोक्तश्चभागः कदलीजलार्द्राः ॥४७॥**

एक भाग हरितालको भस्म, पाँच भाग शङ्खको भस्म र पाँच भाग पाखरी (?) को भस्म पाँच भाग केराको पानीमा मिसाई लगाउनाले रौँ झर्दछ ।

**तालकं शङ्खचूर्णं तु मञ्जिष्ठाभस्म किंशुकम् ।**
**समभागप्रलेपेन रोमखण्डनमुत्तमम् ॥४८॥**

हरिताल भस्म, शङ्ख भस्म र मजिठोको भस्मलाई पलाँशको फूलसँग पिसी लेप गर्नाले सबै रौँ सफा हुन्छ ।



**तालकं शङ्खचूर्णन्तु पिष्ट्वा च क्षारतोयकैः ।**
**तेनलिप्त्वाकचाघर्मस्थिते गच्छन्ति तत्क्षणात् ॥४९॥**

हरितालको धुलो र शङ्खको धुलो चुन पानीमा घोटी रौँ भएका स्थानमा लगाएर घाममा सुकाउनाले रौँ सफा हुन्छ ।

**पूङ्गपत्रोत्थनीरेण पिष्ट्वा गन्धकमुत्तमम् ।**
**तेन लिप्ते स्थिते घर्मे रोमखण्डनमुत्तमम् ॥५०॥**

सुपारीका पातको रसमा उत्तम खालको गन्धकलाई पिसी रौँ भएका स्थानमा लगाउनाले र घाममा सुकाउनाले उत्तम तरिकाले रौँ जान्छ ।

**स्त्री जननेन्द्रिय सङ्कुचनका उपाय**

**निशाद्वयं पङ्कजकेशरं च निष्पीडय देवद्रुमतुल्यभागम् ।**

**अनेन लिप्तं मदनातपत्रं प्रयाति सङ्कोचफलं युवत्याः ॥५१॥**

हलेदो, चुत्रो, कमलको केशर र देवदारको काठ बराबर मिसाई पानीमा पिसेर लगाउनाले युवतीको जननेन्द्रिय खुम्चिन्छ ।

**सङ्घातकीपुष्पफलत्रिकेन शम्बत्वचा साररस घृतेन ।**
**लिप्त्वा वराङ्गं मधुकेन तुल्यं वृद्धापि कन्येव भवेत् पुमान्ध्री ॥५२॥**

धयैँरो (सङ्घातकी), त्रिफला, जामुनुको बोक्रा (शम्बत्वचा), जामुनुको गुदी, घिउ र जेठीमधु बराबर मात्रामा मिसाई पिसेर  लेप लगाउनाले बूढी स्त्रीको जननेन्द्रिय पनि कन्याकेटीको जस्तो हुन पुग्दछ ।

**इन्दीवरव्याघ्रिवचोषणानां पुरङ्गमारासनयामिनीनाम् ।**
**लेपश्च नार्याः स्मररन्ध्रसंस्थो सङ्कोचयत्याशु हठेन रन्ध्रम् ॥५३॥**

नीलकमलका गेडा, कण्टकारी, बोझो, कँडेलको बोक्रा र बीज, विजयशाल र हलेदो बराबर मात्रामा लिई घोटेर लेप बनाई दल्नाले जननेन्द्रिय चाँडै नै खुम्चन्छ ।



**या शक्रगोपं स्वयमेव पिष्ट्वा विलिम्पति स्त्री च वराङ्गदेशम् ।**
**आहत्य देशं कठिनं च गाढं भवेन्नचात्रास्ति विचार्य कार्या ॥५४॥**

इन्द्रगोपलाई आफैँले पिसेर दल्दछिन् भने तिनको जननेन्द्रिय कडा र गहिरो समेत हुन्छ । (शक्रगोपको अर्थ अहिलेसम्म इन्द्रगोप नामक कीरा मात्र पाइएको छ, तर टीकाकारहरूले बुटीविशेष पनि अर्थ लगाएका छन्, जसको पुष्टी गर्न सकिएको छैन) ।

**ग्राम्यधर्ममा संलग्न हुने स्त्री-पुरुषको सन्तुष्टीका उपाय**

**यद्यप्यष्टगुणाधिकोनिगदितः कामाङ्गनानां सदा**
**नो योति द्रवतां तथापि झटिति स्त्री कामिनां सङ्गमे ।**
**तस्माद्भेषजसम्प्रयोगविधिना सङ्क्षेपतोद्रावणं**
**केचित्पल्लवयामिनीरजदशांभीत्यापरं कामिनाम् ॥५५॥**

कामशास्त्रहरूले पुरुषको भन्दा स्त्रीको कामशक्ति आठ गुना बढी हुन्छ भनी बताएका छन् । यसैले सहवासकालमा स्त्री चाँडै चरमोत्कर्षमा पुग्दैनन् । यसैले म त्यस्तो ओखतीका बारेमा संक्षेपमा बताउँदछु जसले गर्दा स्त्रीले पनि पुरुषसँगसँगै चरमोत्कर्षको आनन्द लिन सकून् ।

**सिन्दूरचिञ्चाफलमाक्षिकानि तुल्यानियस्यामदनातपत्रे ।**
**प्रलिप्य तस्यः पुरुषप्रसङ्गात् प्रागेव वीर्यच्च्युतिमातनोति ॥५६॥**

जननेन्द्रियमा सिन्दूर, इमलीको फल र मह मिसाई पिसी लेप बनाएर दली पुरुषसँग ग्राम्यधर्ममा संलग्न हुने स्त्री चाँडै चरमोत्कर्षको बिन्दुमा पुग्दछे ।

**व्योषं रजः क्षौद्रसमन्वितं वा क्षिप्तं यदि स्यात् स्मरयन्त्रगेहे ।**
**द्रुतं भवेत् सा सहसैव नारी, दृष्टः सदाऽयं किल योगराजः ॥५७॥**

त्रिकटुको धुलो महमा मिसाएर जननेन्द्रियमा थोरै राखी ग्राम्यधर्ममा संलग्न भए स्त्रीले चाँडै सन्तुष्टी प्राप्त गर्दछे ।



**पिप्पली चन्दनं चैव बृहती पक्वतिन्तिडी ।**
**एषां लिङ्गे प्रलेपेन द्रवेन्नारी न संशयः ॥५८॥**

पिप्ला, रक्तचन्दन, बिहीँ र पाकेको अमिली मिसाएर पिसी बनाइएको लेप आफ्नो जननेन्द्रियमा दलेर पुरुष ग्राम्यधर्ममा संलग्न भएमा निश्चय नै स्त्री चाँडै सन्तुष्ट हुन्छे ।

**अगस्त्यपत्रद्रवसंयुतेन मध्वाज्यसम्मिश्रितटङ्कणेन ।**
**लिप्त्वा ध्वजं यो रमतेऽङ्गनानां स शुक्रमाकर्षति शीघ्रमेव ॥५९॥**

जुन पुरुष अगस्तिका पातको रसमा घिउ, मह र स्वाग मिसाएर लेप बनाई आफ्नो जननेन्द्रियमा दलेर ग्राम्यधर्ममा संलग्न हुन्छ उसले स्त्रीको डिम्बलाई आफूतिर तान्दछ वा आकर्षित गर्दछ ।

**सुलोध्रधत्तूररपिप्पलीनां क्षुद्रोषणक्षौद्रविमिश्रितानाम् ।**
**लेपेन लिङ्गस्य करोति रेतःच्युतिं विपक्षप्रमदाजनस्य ॥६०॥**

लोध, धतुरो, पिप्ला, कण्टकारी र पिप्लाको जरा मिसाई धुलो बनाएर महमा मिसाई लेप बनाएर आफ्नो जननेन्द्रियमा दली ग्राम्यधर्ममा संलग्न हुने पुरुषको वीर्यलाई स्त्रीले गर्भाशयतिर तान्दछे (पुरुष चाँडै सन्तुष्ट हुन्छ) ।

**तुरगसलिलमध्ये भावितं क्षेत्रमाषं मरिच मधुकतुल्यां पिप्पलीं पेषयित्वा ।**
**परिरमति विलिप्य स्त्रीयलिङ्गं नरो यः प्रभवति वनितानां काककल्लोलमानः ॥६१॥**

अश्वगन्धाको पातलाई पानीमा उमालेर झिकी मास, जेठीमधु र पिप्ला बराबर मात्रामा मिसाएर (तेलमा) पिसी पुरुषले जननेन्द्रियमा दलेर ग्राम्यधर्ममा संलग्न हुँदा स्त्री चाँडू सन्तुष्ट हुन्छे ।

**बिल्वपुष्पं सकर्पूरं मुण्डीपुष्पं च पेषितम् ।**
**लिङ्गलेपेन रामाणां द्रावो भवति सङ्गमे ॥६२॥**

बेलको फूल, गोरखमुण्डीको फूल र कपूर मिसाएर पिसी पुरुषले जननेन्द्रियमा लेप लगाएर ग्राम्यधर्ममा संलग्न हुँदा स्त्री चाँडै सन्तुष्ट हुन्छे ।



**बृहतीफलमूलानि पिप्पली मरिचानि च ।**
**मधुरोचनया सार्द्धं लिङ्गलेपं द्रवान्विताः ॥६३॥**

बिहीँको फल, बिहीँको जरा, पिप्ला, मरिच र गोरोचन बराबर मात्रामा लिई महमा पिसेर जननेन्द्रियमा दली पुरुषकी स्त्री चाँडै सन्तुष्ट हुन्छे ।

**मरिचकनकबीजैः पिप्पलीलोध्रचूर्णैर्विमलमधुविमिश्रैर्मानवो लिप्तलिङ्गः ।**
**स्मरति रतिविलासे कष्टसाध्यां च नारीं समुचितरतिरागं संविदध्या(विद्रवा)दवश्यम् ॥६४॥**

मरिच, धतुराका गेडा, पिप्ला र लोधको धुलो महसँग मिसाएर पिसी लेप बनाएर जननेन्द्रियमा लगाई ग्राम्यधर्ममा संलग्न भएको पुरुषबाट कठिनतासँग सन्तुष्ट हुने स्त्री पनि सजिलैसित सन्तुष्ट हुन्छे ।

**सर्वेषां द्रवयोगानां मन्त्रराजं मयोदितम् ।**
**जपेदष्टोत्तरशतं तत्र योगस्य सिद्धये ॥६५॥**

उल्लेखित सबै ओखती प्रयोग गर्दा मैले बताएको तल उल्लेखित मन्त्र एक सय आठ पटक जप गर्नाले तत्काल प्रयोग सफल हुन्छ ।

**मन्त्रः- ॐ नमो भगवते रुद्राय उड्डामरेश्वराय स्त्रीणां मदं द्रावय द्रावय ठः ठः स्वाहा ॥**

**इति उड्डीशतन्त्रे रावणशिवसम्वादे वशीकरण प्रयोगकथनं नाम सप्तमः पटलः ॥७॥**

## अथाष्टमः पटलः

## आकर्षणप्रयोगः

### ईश्वर उवाच

**अथाग्रे कथयिष्यामि आकर्षणविधिं वरम् ।**
**यस्य विज्ञानमात्रेण सत्यमाकर्षणं भवेत् ॥१॥**
**मानुषासुरदेवाश्च सयक्षोरगराक्षसाः ।**
**स्थावराः जङ्गमाश्चैव आकृष्टास्ते न संशयः ॥२॥**

भगवान् शिव भन्नुहुन्छ- हे रावण ! अब म आकर्षण सिद्धि प्रयोग गर्ने उत्तम विधिका बारेमा बताउँदछु । तिमी सावधान भएर सुन । यो जानेपछि मानिस, राक्षस, देवता, पशु, पंक्षी आदि सबैको अवश्य नै आकर्षण हुने गर्दछ । यो प्रयोग पनि बिना मन्त्र सिद्ध हुन्छ, यसमा शङ्का नगर्नू ।

**गृहीत्वार्जुनवन्दाकमाश्लेषायां समाहितः ।**
**अजामूत्रेण सम्पिष्ट्वा निक्षिपेच्छिरसोपरि ॥३॥**
**नारी वा पुरुषो यस्य सुतौ वा पशुरेव च ।**
**आकृष्टः स्वयमायाति सत्यं सत्यं वदाम्यहम् ॥४॥**

देवदार वृक्षका मुना (वा देवदार वृक्षमा उम्रेको ऐँजेरु) अश्लेषा नक्षत्रमा लेराई बाख्रीको दूधमा पिसी जुन स्त्री, पुरुष, पशु आदिका टाउकामा हालिन्छ उ आकर्षित भएर आफैं हिँडेर आफूतिर आउँदछ ।

**सूर्यावर्तस्य मूलं तु पञ्चम्यामानयेत् बुधः ।**
**ताम्बूलेन समं दद्यात् स्वयमायाति भक्षणात् ॥५॥**

पञ्चमीका दिन हुर्हुरेको जरा उखेलेर लेराउनू र त्यसलाई पानको पातमा राखेर खान दिनू । जसले खान्छ उ खुवाउनेसँग आफैं आकर्षित भएर आउँदछ ।

**साध्यवामपदस्थां तां मृत्तिकामाहरेत्ततः ।**
**कृकलासस्य रक्तेन प्रतिमां कारयेत्ततः ॥६॥**
**साध्यनामाक्षरं तस्यास्तद्रक्तैर्विलिखेत् हृदि ।**

**मूत्रस्थाने च निखनेत् सदा तत्रैव मूत्रयेत्॥**
**आकर्षयेत्तु तां नारीं शतयोजनसंस्थिताम्॥७॥**

जुन स्त्रीलाई मोहनी लगाउनु छ उनको देब्रे गोडा मुनिको माटो लेराई छेपारोको रगतले एक पुत्ला बनाउनू । त्यो पुत्लाको मुटुमा त्यही रगतले त्यो स्त्रीको नाम लेख्नू र पिसाब गर्ने स्थानमा त्यसलाई गाडेर सधैं त्यसैमाथि पिसाब फेर्ने गर्नू । यसो गर्नाले सय योजनसम्मका स्त्री पनि आकर्षित भएर आउने छिन् । यी सब प्रयोग बिना मन्त्र सिद्ध हुने प्रयोग हुन् ।

**इति उड्डीशतन्त्रे रावणशिवसम्वादे आकर्षणप्रयोगकथनं नाम अष्टमः पटलः॥८॥**

# अथ नवमः पटलः
## यक्षिणी साधनम्
## ईश्वर उवाच

**अथाग्रे कथयिष्यामि यक्षिण्यादिप्रसाधनम् ।**
**यस्य सिद्धौ नराणां हि सर्वे सन्ति मनोरथाः ॥१॥**

भगवान् शिव भन्नु हुन्छ- अब यसपछि म सिद्ध गरी प्रयोग गर्नाले मानिसका सबै कामना पूरा गर्नसक्ने यक्षिणी साधनाको विधिलाई बताउँदछु ।

**सर्वासां यक्षिणीनां तु ध्यानं कुर्यात् समाहितः ।**
**भगिनी मातृ पुत्री स्त्री रूपन्तुल्यं यथेप्सितम् ॥२॥**

यक्षिणी साधना गर्दा आफूले चाहेको भाव अनुसार यक्षिणीलाई दीदिबहिनी, आमा, छोरी वा पत्नीकारूपमा एकाग्र भई ध्यान गर्नुपर्दछ ।



**भोज्यं निरामिषं चान्नं वर्ज्यं ताम्बूल भक्षणम् ।**
**उपविश्यजपादौ च प्रातः स्नात्वा न कं स्पृशेत् ॥३॥**
**नित्यकृत्यं च कृत्वा तु स्थाने निर्जनिके जपेत् ।**
**यावत् प्रत्यक्षतां यान्ति यक्षिण्यो वाञ्छितप्रदाः ॥४॥**

यक्षिणी साधना गर्दा मासु र पान खान हुँदैन । बिहान नुहाएर नित्यकर्म सकी जप गर्नुपर्दछ । कसैलाई पनि छुन हुँदैन । यी नियमको पालना मनले चिताएका कुरा दिनसक्ने यक्षिणीले प्रसन्न भई प्रत्यक्ष दर्शन नदिँदासम्म गरिरहनु पर्दछ ।

महायक्षिणी साधना मन्त्र

**॥ॐ क्लीं ह्रीं श्री महायक्षिण्यै सर्वैश्वर्यप्रदात्र्यै नमः ॥**
**इतिमन्त्रस्य च जपं सहस्रस्य च सम्मितम् ।**
**कुर्यात् बिल्वसमारूढो मासमात्रमतन्द्रितः ॥५॥**

उल्लेखित मन्त्रलाई बेलका रूखमा चढेर जितेन्द्रिय भई एक महिनासम्म जप गर्नुपर्दछ ।

**सत्वामिषबलिं तत्र कल्पयेते संस्कृतं पुरः ।**
**नानारूपधरा यक्षी क्वचित् तत्रागमिष्यति ॥६॥**

साधना स्थलमा दिनहुँ मासु र मदिरा राख्ने गर्नु किन कि अनेक थरी रूप लिने यक्षिणी कुन दिन के को रूप लिएर आउँदछिन् भन्न सकिँदैन ।

**तां दृष्ट्वा न भयं कुर्याज्जपेत् संसक्तमानसः ।**
**यस्मिन्दिने बलिं भुक्त्वा वरं दातु समर्थयेत् ॥७॥**
**तदावरान्वै वृणुयात्तांस्तान्वैमनसेप्सितान् ।**
**धनमानयितुं ब्रूयादथवा कर्णकार्णिकीम् ॥८॥**
**भोगार्थमथवन ब्रूयान्नृत्यं कर्तुमथापि वा ।**
**भूतानानयितुं वापि स्त्रियमानयितुं तथा ॥९॥**
**राजानं वा वशीकर्तुमायुर्विद्यां यशोबलम् ।**
**एतदन्यद्यदीप्सेत् साधकस्तत्तु याचयेत् ॥१०॥**

जुनबेला यक्षिणीले आई दर्शन दिनेछिन् त्यसबेला नडराउनू (किन कि उनले डरलाग्दो रूप पनि लिन सक्दछिन्) ।त्यसबेला पनि जप गरि नै रहनू । जब उनले म फलानो दिन बलि लिन्छु (वा वरदान दिन्छु) भन्दछिन् तब त्यो कुरा मानी सोही दिन वरदान माग्नू । धन चाहिए धन माग्नू, कानमा कुरा गर्नू पर्नेभए सोही कुरा भन्नू, नाच चाहिए नाच, स्त्री चाहिए उनलाई लेराउन, कपडा चाहिए त्यही कुरा लेराउन भन्नू । राजालाई वशमा पार्न वा आयु, विद्या, यश, बल आदि जे चाहिएको हो सोही कुरा उनीसँग बरदान माग्नू ।

**चेत्प्रसन्ना यक्षिणी स्यात् सर्वं दद्यान्नसंशयः ।**
**अशक्तस्तुद्विजैः कुर्यात् प्रयोगं सुरपूजितम् ॥११॥**

प्रसन्न छिन् भने निसन्देह यक्षिणीले सबै कुरा दिन सक्दछिन् । साधना आफैं गर्न नसक्नेले नडराउने खालको ब्राह्मण मार्फत यक्षिणी साधना गराउनू । यो देवपूजित साधना देवताबाट समेत गरिएको थियो ।

**सहायानथवा गृह्य ब्राह्मणान्साधयेत् व्रतम् ।**
**तिस्रःकुमारिकाभोज्याः परमान्नेन नित्यशः ॥१२॥**

अथवा यो साधना आफ्नो सहायकलाई राखी ब्राह्मणबाट गराउनू । हरेक दिन तीन वटी कुमारी कन्यालाई भोजन गराइरहनू ।

**सिद्धे धनादिके चैव सदा सत्कर्म आचरेत् ।**
**कुकर्मणिव्ययश्चेत् स्यात् सिद्धिर्गच्छति नान्यथा ॥१३॥**

धन प्राप्त गर्न साधना गरिएको भए त्यसरी प्राप्त हुने धन सत्कर्ममा प्रयोग गर्नू, गरिएन भने प्राप्त सिद्धि नष्ट हुन्छ ।

धनदातृ यक्षिणीको मन्त्रः

**ॐ ऐं ह्रीं श्रीं धनं मम देहि देहि स्वाहा ॥**



**अश्वत्थवृक्षमारुह्य जपेदेकाग्रमानसः ।**
**धनदाया यक्षिणीं च धनं प्राप्नोति मानवः ॥१४॥**

धनदाता यक्षिणीको मन्त्रलाई पीपलको बोटमाथि बसेर एकाग्र मनले जप गर्नाले प्रसन्न भई धन दिन्छिन् ।

पुत्रदातृ यक्षिणीको मन्त्र

**ॐ ह्रीं ह्रीं ह्रूं रं कुरु कुरु स्वाहा ॥**
**चूतवृक्षं समारुह्य जपेदेकाग्रमानसः ।**
**अपुत्रो लभते पुत्रं नान्यथा मम भाषितम् ॥१५॥**

पुत्र चाहनेले आँपको रूखमाथि बसेर मन्त्र जप गर्नाले यक्षिणी प्रसन्न भई पुत्र प्रदान गर्दछिन् ।

स्थिरलक्ष्मी यक्षिणीको मन्त्र

**ॐ ह्रीं क्लीं महालक्ष्म्यै नमः ॥**

**वटवृक्षे समारूढो जपेदेकाग्रमानसः ।**
**लक्ष्मी यक्षिणी च स्थितालक्ष्मीश्च जायते ॥१६॥**

बरको रूखमा चढेर स्थिरलक्ष्मी प्रदान गर्ने यक्षिणीको मन्त्र जप गर्नाले घरमा लक्ष्मी स्थिर भएर बस्दछिन् ।

सर्वकार्य सिद्धि

**ॐ ऐं जया यक्षिण्यै सर्वकार्यसाधनं कुरु कुरु स्वाहा ॥**
**अर्कमूल समारूढो जपेदेकाग्रमानसः ।**
**यक्षिणा च जयानाम सर्वकार्यकरी मता ॥१७॥**

आँकको जरामाथि बसेर एकाग्र मनले जपिएको उल्लेखित जया नामक मन्त्रले यक्षिणी प्रसन्न भई सबै कार्यमा सिद्धि प्रदान गर्दछिन् ।

**गुप्तेन विधिना कार्यं प्रकाशं नैव कारयेत् ।**

**प्रकाशे बहुविघ्नानि जायते नात्र संशय ॥१८॥**
**प्रयोगाश्चानुभूतोऽयं तस्माद्यत्नसमाचरेत् ।**
**निर्विघ्नेन विधानेन भवेत् सिद्धिरनुत्तमा ॥१९॥**

यक्षिणीको साधना गोप्य तरिकाले गर्नू, अरुले थाहा पाए निश्चय नै अनेक थरी बाधा आइपर्दछन् । यसबाट प्रयोग गर्दा सफलता पनि पाईंदैन । यसैले सफलता प्राप्त गर्न सतर्क भएर गोप्य तरिकाले साधना गर्नू ।

भूतिनी साधना

**साभूतिनी कुण्डलधारिणी च सिन्दूरिणी चाप्यथ हारिणी च ।**
**नटी तथा चातिनटी च चेटी कामेश्वरी चापि कुमारिका च ॥२०॥**

भूतिनी नामकी यक्षिणीले कुण्डल लगाएकी, सिन्दूर लगाएकी, हार लगाएकी, नाच्ने, धेरै नाच्ने, दासी, कामेश्वरी, कन्या आदि जस्ता अनेक थरी रूप धारण गर्दछिन् ।

भूतिनीमन्त्रः

ॐ ह्रौं क्रूँ क्रूँ क्रूँ कटुकटु अमुकी देवी वरदा सिद्धिदा च अम्भः ॥
चम्पावृक्षतले रात्रौ जपेदष्टसहस्रकम् ।
पूजनं विधिनाकृत्वा दद्यात् गुग्गुल धूपकम् ॥२१॥
सप्तमेऽह्नि निशीथे च साचागच्छतिभूतिनी ।
दद्यात्गन्धोदकेनार्घ्यं तुष्टामातादिका भवेत् ॥२२॥

चाँपको बोटमुनि बसेर हरेक दिन आठ हजार भूतिनीको मन्त्र जप गर्नू । पहिले उनको पूजा गर्नू अनि गोकुलधूपको धूप दिनू । यो विधिले उपासना गर्दा सातौं रातमा भूतिनी आउने छिन् । आफ्नी इष्टदेवी आएपछि उनलाई चन्दन मिसिएको जलले अर्घ्य दिनू । यसपछि भूतिनी खुशी भएर साधकले चाहेकै रूपमा परिणत हुन्छिन् ।

मातेत्यष्टादशानां च वस्त्रालङ्कारभोजनम् ।
भगिनीचेत्तदानारींदूरादाकृष्य सुन्दरीम् ॥२३॥
रसं रसाञ्जनं दिव्यं विधानं च प्रयच्छति ।

भार्या च पृष्ठमारोप्य स्वर्गं नयति कामिता ॥
भोजनं कामिकं नित्यं साधकाय प्रयच्छति ॥२४॥

साधकले भूतिनी नामकी यक्षिणीलाई माताका रूपमा सिद्ध गरे उनले अठार जना मानिसलाई वस्त्र, गहना र भोजन दिनहुँ दिनेछिन् । बहिनीका रूपमा सिद्ध गरे उनले टाढाटाढाबाट सुन्दरी स्त्री लेराएर तथा रसिला दिव्य भोजन दिने छिन् । पत्नीका रूपमा सिद्ध गरे उनले आफ्नै ढाडमा बोकी स्वर्ग आदि लोमा घुमाउँदछिन् र भोजन आदि कुरा पनि उपलब्ध गराउँदछिन् ।

रात्रौ देवालयं दत्त्वा शुभाशय्योपकल्पयेत् ।
जाति पुष्पेण वस्त्रेण चन्दनेन च पूजयेत् ॥२५॥
धूपं च गुग्गुलं दत्त्वा जपेदष्टसहस्रकम् ।
जपान्ते शीघ्रमायाति चुम्बत्यालिङ्गयत्यपि ॥२६॥
सर्वालङ्कारसंयुक्ता सम्भोगादिसमन्विता ।
कुबेरस्य गृहादेव द्रव्यमाकृष्य यच्छति ॥२७॥

रात परेपछि मन्दिरमा सुन्दर पलङ्गमा ओछ्यान सजाउनू । चमेलीको फूल, चन्दन आदिले पूजा गरी गोकुलधूपको धूप दिनू । आठ हजार पटक मन्त्र जप गर्नू । जप समाप्त हुँदा सबै वस्त्र र अलङ्कारले सुसज्जित भई यक्षिणी प्रकट हुनेछिन् र साधकलाई अँगालो हाल्ने, म्वाइ खाने जस्ता कार्य गर्दै भोग गर्नेछिन् । यिनले कुबेरको खजानाबाट धन पनि लेराएर दिनेछिन् ।

## अथ शव-श्मशान साधन
## ईश्वर उवाच

**अथातः सम्प्रवक्ष्यामि शवसाधनमुत्तमम् ।**
**श्मशानसाधनं चापि तदाश्चर्यकरं परम् ॥**
**यस्य विज्ञानमात्रेण सिद्धो भवति साधकः ॥२८॥**

भगवान् शिव भन्नुहुन्छ-अब म शव-साधना र मसान-साधना जस्ता अती आश्चर्यजनक साधनाका बारेमा बताउँदछु । यो साधना जान्नाले साधकले सिद्धि प्राप्त गर्दछ ।

**श्मशानालयमागत्य उपवासो जितेन्द्रियः ।**
**अमयां भौमवारे च शवोपरि समारुहेत् ॥२९॥**
**अयुतं प्रजमेन्मन्त्रं मौनी निर्भयरूपतः ।**
**शवसाधनमेतत्तु सिद्ध्यत्यत्र न संशयः ॥३०॥**
**यद्यदाज्ञापयति तत्तत् कुरुते सुविनिश्चितम् ।**
**जपान्ते पूजनं कार्यं श्मशाने निर्जने तथा ॥**
**षोडशैरुपचारैस्तुश्यामां श्यामलसुन्दरिम् ॥३१॥**

मङ्गलबारे औंसीका दिन व्रत बसी इन्द्रियलाई नियन्त्रण गर्दै मसानमा जानू र कुनै पुरुषको लाश हेरी उसको छातीमा नडराई बसेर तलको मन्त्र दश हजार पटक जप गर्नू । त्यसपछि त्यहाँबाट उठेर कुनै एकान्तस्थलमा गई काली र कालीसुन्दरीलाई षेडशोपचारले पूजा गर्नू । यसो गर्नाले यक्षिणी प्रसन्न भई साधकले जे भन्दछ त्यही गर्ने बन्दछिन् ।

**शवसाधन मन्त्र**

**ॐ ह्रीं शवमेनं साधय साधय स्वाहा ॥**

हिँड्ने शक्ति

**काकजङ्घासिताग्राह्यागृधस्य च वसा तथा ।**
**अश्वगन्धा समायुक्ता ह्युष्ट्रक्षीरे च पेषयेत्॥**
**अनेन लिप्तपादे तु योजनानां तिथिर्व्रजेत्॥३२॥**

सेतो काकजङ्घा, गिद्धको बोसो र अश्वगन्धा बराबर मात्रामा लिई उँटको दूधमा पिसेर पैँतालामा दल्नाले मानिस पन्ध्र योजन (गोडा नदुखी) पैदल हिँड्न सक्दछ ।

पादुका सिद्धि मन्त्र

**ॐ नमो भगवते रुद्राय भूत बेताल त्राशनाय शङ्ख चक्र गदाधराय हन हन महते चन्द्रयुताय हुँ फट् स्वाहा॥**

यो मन्त्र एक लाख पटक जप गर्नाले सिद्ध हुन्छ । त्यसपछि सय पटक पढेर उपर्युक्त लेपलाई मन्त्रनु पर्दछ ।



**ॐ नमो भगवते रुद्राय मासे समले काले खले घोर प्रवर सर सर स्वाहा॥**
**श्वानं मार्जारनकुलं पित्तं ग्राह्यं समं समम् ।**
**योजनानां तिथिर्गत्वा काकमांसं रसाञ्जनम्॥**
**पिष्ट्वा पादप्रलेपेन पुनरावर्तते तथा॥३३॥**

कुकुर, बिरालो र न्याउरीमुसाको पित्त बराबर मात्रामा लिई लेप बनाएर पैँतालामा दल्नाले मानिस पन्ध्र योजन पैदल जान सक्दछ । पुनः कागको मासु र रसाञ्जन मिसाएर लेपब नाई दल्नाले त्यति नै परबाट पैदल नै फर्केर पनि आउन सक्दछ ।

**ॐ नमो भगवते रुद्राय हरितगदेश्वराय त्रासय त्रासय चालय चलय स्वाहा॥**
**काकस्य हृदयं नेत्रं जिह्वां चैव मनःशिलाम् ।**
**सिन्दूरं गैरिकं चैव अजमारी च मालतीम्॥३४॥**
**समां रुद्रजटाचैव विदार्यां सहपेषयेत् ।**
**तल्लिप्ते पादसहसा योजनानां शतं व्रजेत्॥**
**बलीपलितनिर्मुक्तो दययाभूतसंप्लवम्॥३५॥**

कागको मुटु (वा कलेजो), आँखा र जिभ्रो; मनसिला, सिन्दूर, गेरु, ज्वानू, चमेली र विदारीकन्द बराबर मात्रामा लिई पिसेर लेप बनाई पैँतालामा दल्नाले गोडामा सय योजन हिँड्न सक्ने तागत आउँदछ । यो लेपलाई उपरोक्त सिद्ध मन्त्रले सात पटक मन्त्रेर दल्नु पर्दछ ।

**मृतसञ्जीवनी प्रयोग**

**मृतसञ्जीवनीं विद्यां कथयिष्यामि प्रेमतः ।**
**लिङ्गमङ्कोल वृक्षाद्यः स्थापयित्वा प्रपूजयेत् ॥३६॥**
**यवं घटं च तत्रैव पूजयेल्लिङ्गसन्निधौ ।**
**वृक्षं लिङ्गं घटं चैव सूत्रेणैकेन वेष्टयेत् ॥३७॥**

भगवान् शिव रावणलाई भन्नुहुन्छ– अब म मृसञ्जीवनी विद्या प्रयोग विधिलाई प्रेमपूर्वक बताउँदछु । अम्फीफलको बोट मुनि एउटा शिवलिङ्ग स्थापना गर्नू । यसका नजिकै जलपूर्ण घडा स्थापना गरी त्यसमाथि वा त्यसमा जौ राख्नू । अम्फीफलको वृक्ष, शिवलिङ्ग र त्यो घडालाई एउटै धागोले बेर्नू ।

**चतुर्भिः साधकैर्नित्यं प्रणिपत्यक्रमेण तु ।**

**एवं च द्विदिनं कुर्यादघोरेण समर्चयेत् ॥३८॥**
**पुष्पाचिफलपाकान्तं साधनं कारयेत् बुधः ।**
**फलानिपक्वान्यादायपूर्वोक्तं पूरयेद् घटम् ॥३९॥**

हरेक दिन चार जना साधकले एक एक गरी प्रणाम गर्नू । अघोर मन्त्रले हरेक दिन पूजा गर्नू । जप गर्नू । जबसम्म अम्फीफलमा फल लाग्दैन तबसम्म एक एक साधकले दुई दुई दिनको पालो गरी त्यो लिङ्गलाई पूजा गरिरहनू । जब त्यो रूखमा फलेका फल पाक्दछन् तब त्यो फललाई पहिले नै राखिएको घडामा हालि दिनू ।

**तद्घटं पूजयेन्नित्यं गन्धपुष्पाक्षतादिभिः ।**
**तुषवर्जन्ततः कुर्याद्बीजानां घर्षयेन्मुखम् ॥४०॥**
**तन्मुखे ब्रह्मणां वृत्तं किञ्चित् प्रलेपयेत् ।**
**विस्तीर्णमुखभागान्तः कुम्भकारकरोद्भवम् ॥४०॥**

हरेक दिन चन्दन, फूल, अक्षता आदि पूजा सामग्रीले त्यो घडालाई पूजा गरिरहनू । त्यसपछि त्यो

घडाबाट अम्फीफलका बीज निकाली त्यसको बोक्रा ताछ्नू । कुम्हालेको घरबाट अर्को फराकिलो मुख भएको घडा लेराई त्यसको मुखभित्र तलसम्म सुहागाको लेप दल्नू ।

**मृत्तिकां लेपयेत्तत्र तानि बीजानि रोपयेत् ।**
**कुण्डल्याकारयोगेन यत्नादूर्ध्वमुखानि वै ॥४१॥**
**शुष्कं ताम्रपात्रोर्द्ध्वं भाण्डं देयमधोमुखम् ।**
**आतपे धारयेत्तैलं ग्राहयेक्तं च रक्षयेत् ॥४२॥**
**मासार्द्धं चैव तत्तैलं मासार्द्धं तिलतैलकम् ।**
**नस्यं देयं मृतस्यैव कालदष्टस्य तत्क्षणात् ॥४३॥**

यसपछि उक्त भित्री भागमा माटोले लिपी त्यसमा अम्फीफलको बीज रोप्नू । केही दिनपछि जब बीज सुक्दछ तब तेल निकाल्न मिल्ने गरी तामाको भाँडाले ढाकेर उक्त घडालाई घोप्टो पार्नू । माथिबाट आगोको आँच दिनू र तेल निकाल्नू । निस्केको तेललाई सिसिमा हाल्नू । आधा मासा यो तेलमा आधा मासा तिलको तेल मिसाई सर्पले डसी मरेको मानिसलाई सुँघाउने हो भने उ पुनः तत्काल जीवित हुन्छ ।



**अघोरमन्त्रः**

**अघोरेभ्योऽथघोरेभ्योघोरतरेभ्यः । सर्वेभ्यो सर्वं सर्वेभ्यः नमस्तेऽस्तु रुद्ररुपेभ्यः ॥**

**विद्याधर सिद्धिः**

**मायाबीजं तथा गौ गोपतये तदन्तरम् ।**
**एतन्मन्त्रं शुचिभर्स्त्वा निशीथे तु जपेत् सुधीः ॥४५॥**
**त्रिसहस्रं जपेन्नित्यं ततः सिद्धिर्भवेत् ध्रुवम् ।**
**गन्धर्वशब्दविद्भूत्वा बलवान् पुत्रवान् भवेत् ॥४६॥**
**ॐ ह्रीं गौर्गोपतये नमः ॥**

हरेक आधारातमा विद्याधर मन्त्र तीन हजार पटक जप गर्नू । यसपछि यो मन्त्र सिद्ध हुन्छ । यसबाट गन्धर्व शब्दको ज्ञान हुनुका साथै पुत्र र बल पनि प्राप्त हुन्छ ।

**इति उड्डीश तन्त्रे रावण-शिव सम्वादे विद्याधर सिद्धिकथनं नाम नवमः पटलः ॥९॥**

## अथ दशमः पटलः
## ईश्वर उवाच

**इन्द्रजालं प्रवक्ष्यामि श्रृणुसिद्धिं प्रयत्नतः ।**
**येन विज्ञानमात्रेण ज्ञायते सर्वकौतुकम् ॥१॥**

शिव भगवान् भन्नुहुन्छ-अब म इन्द्रजाल खेलका बारेमा वर्णन गर्दछु । यसको ज्ञानले हरेक किसिमका यस्ता खेलका बारेमा थाहा हुन्छ ।

### भूत लगाइ दिने विधि

**आदौ भूतकरं वक्ष्ये तच्छृणुष्व समासतः ।**
**भल्लातक रसे गुञ्जा विषं चित्रकमेव च ॥२॥**
**कपिकच्छुकरोमाणि चूर्णं कृत्वा प्रयत्नतः ।**
**एतच्चूर्ण प्रदानेन भूतीकरणमुत्तमम् ॥३॥**



सर्वप्रथम भूत बनाउने विधि संक्षेपमा बताउँदछु, सुन । भलायोको रसमा रातीगेडी, वत्सनाभ (विष), चितू र काउसोको भुस मिसाई सावधानीपूर्वक धुलो बनाएर खुवाउनाले मानिसलाई उत्तम तरिकाले भूत लाग्दछ ।

### भूत लागेको लक्षण

**तस्य रूपं प्रवक्ष्यामि ज्ञायते यस्तु लक्षणैः ।**
**अङ्गानि छिन्धिमायान्ति मूर्च्छन्ति च मुहुर्मुहुः ॥**
**एतु रूपं भवेद्यस्य तत् भूतावेशलक्षणम् ॥४॥**

अब म भूतबाधाका लक्षण बताउँदछु । शरीर विस्तार हल्लिने वा हात गोडा आदि अङ्ग फाल्ने वा काम्ने, पटक पटक बेहोस हुने जस्ता लक्षण भूतबाधाका लक्षणहरू हुन् ।

### भूतबाधा हटाउने उपाय

**चिकित्सा तस्य वक्ष्यामि येन सम्पाद्यते सुखम् ।**

**उशीरं चन्दनं कुष्ठं लेपो भूतविनाशकः ॥५॥**

अब म यसको शान्ति गर्ने उपाय बताउँदछु । खसखस, रक्तचन्दन र कूट मिसाएर लेप बनाई दल्नाले भूतबाधा हट्दछ ।

**ॐ नमो भगवते उड्डामरेश्वराय कुहुनी कुर्बली स्वाहा ॥**

यो (सिद्ध) मन्त्रले सय पटक झार्नाले भूतबाधा हट्दछ ।

**श्रीवेष्टकं घृतं हिङ्गुं देवदारुगवाक्षि च ।**
**गोबालाः सर्षपाः केशाः कटुकी निम्बपल्लवाः ॥६॥**
**द्वेबृहत्यौ वचा चर्व्या कार्पासास्थिरुषायवाः ।**
**छागरोमाणि मायूरपिच्छमेकत्र मेलयेत् ॥७॥**

तारपिनको तेल, घिउ, हिङ, देवदार, ऐरेलु, हरिताल (गोबाला), सर्सिउँ, कपाल, कटुकी, नीमका मुना, बिहीँ, कण्टकारी, बोझो,चाभो, कपासका गेडा, नागबलु, जौ, बोकाको रौँ र मयुरको पुच्छर एकै ठाउँमा मिसाउनू ।



**सुपिष्टो वत्समूत्रेण मृद्भाण्डे धारयेद् बुधः ।**
**एष माहेश्वरो धूपो धूपिनोन्मत्तरोगिणौ ॥८॥**
**ग्रहरक्षा पिशाचाद्याः पन्नगाः भूतपूतनाः ।**
**शाकिन्यैकाहिकद्वित्रिज्वराश्चातुर्थिकान्तकाः ।**
**नश्यन्ति क्षणमात्रेण ये चान्ये विघ्नकारिणः ॥९॥**

यो मिश्रणलाई साँढेको मूत्रमा पिसी माटाका भाँडामा हालेर धूप दिनाले ग्रहबाधा, पिशाचबाधा, भूतबाधा, पूतनाबाधा, शाकिनीबाधा, अनेक प्रकारका जरो र अनेक थरी बालरोग समेत तुरुन्त शान्त हुन्छ ।

**गुग्गुलं लशुनं सर्पिः कञ्चुकं कपिरोम च ।**
**शिखिकुक्कुटयोविष्ठा मलः पारावतस्य च ॥१०॥**
**एतद्धूपात् ग्रहाः क्रूराः पिशाचाभूतपूतनाः ।**

**डाकिन्यैहिज्वरा रौद्रा नश्यन्ति स्पर्शमात्रतः ॥११॥**

गोकुलधूप, लसुन, घिउ, सर्पको काँचुली, बाँदरको रौं, कुखुराको सुली र परेबाको सुली मिसाएर धूप दिनाले निष्ठूर ग्रहबाधा, पिशाच बाधा, भूतबाधा, पूतनाबाधा, डाकिनी बाधा र कडाखालको जरो पनि छुनासाथ नाश हुन्छ ।

**अञ्जनं राजिका कृष्णा मरीचैर्भूतनाशनम् ।**
**नागरं बकुचो निम्बं एतद्वा रौद्रभञ्जनम् ॥१२॥**

कालो सर्सिउँ र कालो मरिच मिसाई गाजल लगाउनाले भूतबाधा नाश हुन्छ । नागरमोथे, बाकुची र नीम मिसाएर गाजल लगाउनाले जरोले गर्ने कडा डाह शान्त हुन्छ ।

**सहिङ्गु वारिणा पीता भूकदम्बस्य मूलिका ।**
**शाकिनी ग्रहभूतानां निग्रहं कुरुते ध्रुवम् ॥१३॥**

ठूलो जातको गोरखमुण्डीको जराको धुलो वा लेदोलाई हिङपानीसँग खानाले भूतबाधा शान्त हुन्छ ।



**विशालायाः फलं पक्वं हितं गोमूत्रनस्यतः ।**
**ब्रह्मराक्षसभूतानां पद्मं वा मरिचान्वितम् ॥१४॥**

पाकेको ऐरेलु, कमलको गानु र कालो मरिच मिसाएर गहुँतमा तयार पारिएको नस लिनाले ब्रह्मराक्षसबाधा र भूतबाधामा हितकर हुन्छ ।

**पुष्पे कुष्माण्डतोयेन निशां सम्पिष्टनिर्मिताम् ।**
**गुटिकाञ्जनमात्रेण भूतग्रहविनाशिनी ॥१५॥**

कुभिण्डोको फूलको रसमा हलेदो मिसाएर गोली बनाउनू । यसको गाजल दल्नाले मात्र पनि भूतबाधा र ग्रहबाधा नाश हुन्छ ।

भूतनाशनमन्त्र

**ॐ नमो भगवते रुद्राय नमः कोशेश्वराय नमो ज्योतिः**
**पतङ्गाय नमो नमः सिद्धि रुपोरुद्राय झपतिस्वाहा ॥**

(यो मन्त्र यथाशक्ति जप गर्नाले कडा खालका ग्रहबाधा, भूतबाधा आदि पनि शान्त हुन्छ) ।

**सद्योजातं तथा घोरो रुद्रो मनसि संस्थितम् ।**
**ज्वरं निहन्ति जन्तूनामशेषं सिद्धवन्दितः ॥१६॥**

सिद्धजनहरूबाट पूजनीय भगवान् शिवको अघोर मन्त्रलाई मनले जप गर्नाले प्राणीहरूको जरो ठिक हुन्छ ।

जरो ठिक गर्ने विधि

**प्रयुक्तासींततो विद्याल्लिखिता वटपल्लवे ।**

**पावकेन ज्वरं घोरं हन्ति तस्यावलोकनात् ॥१७॥**

वरोंको पातमा अँगारले निम्न मन्त्र लेखी  जरो आएका बिरामीलाई दिनाले उसको जरो ठिक हुन्छ । उसका ग्रहबाधा, भूतबाधा आदि पनि शान्त हुन्छन् ।

**ॐ नमो भगवते रुद्राय भूताधिपतये हुँ फट् स्वाहा ॥**
**लिखित्वा दक्षिणे बाहौ बध्योनित्यज्वरापहम् ।**
**अष्टोत्तरशतं जप्त्वा मन्त्रं त्रैमासिके ज्वरे ॥१८॥**

यो मन्त्र लेखी जरो आएका बिरामीको दाहिने हातमा बाँध्न लगाउनू र मन्त्र एक सय आठ पटक जप गर्नू, कुनै पनि खालको जरो निको हुन्छ ।

उन्मत्तकरणम्

**ज्वरग्रस्तायनं दद्यादाचार्या ज्वरशान्तये ।**
**जलं कनकबीजानि धूतचूर्णं समन्ततः ॥**

**गृहे चेटकविष्ठां तु तथा बीजकरं जलम् ॥१९॥**
**तन्दुन्मत्तकचूर्णा तु भक्षणात् तत्क्षणात् व्रजेत् ।**
**एकविंशतिवारानभिमन्त्र्य प्रयत्नतः ॥२०॥**

धतुराका गेडा, फलामको कीट (वा लोहभस्म), कुमालकोटीको दिसा र करञ्जका गेडा पिसेर बनाइएको धुलो पानीसँग खान दिनाले मानिस तुरुन्त उन्मादमा पर्दछ । सिद्ध गरिएको तलको मन्त्रले एक्काईस पटक मन्त्रेर पानी खुवाउनाले उसको उन्माद शान्त हुन्छ ।

उन्माद हटाउने मन्त्र

**ॐ नमो भगवते रुद्राय शूलपाणये पिशाचाधिपतये आवेशय आवेशय कृष्णपिङ्गलाय फट् स्वाहा ॥**

खटिरा निकालि दिने विधि

**खाने पाने प्रदातव्यं दत्तोन्मत्तो भविष्यति ।**
**अथान्यत्सम्प्रवक्ष्यामि योगं परमदुर्लभम् ॥**
**शत्रूणामपकारार्थं यथा मम प्रकाशितम् ॥२२॥**
**येन योजितमात्रेण शत्रुदेहे समन्ततः ।**
**विस्फोटकाश्च जायन्ते घोराः शत्रु विनाशकाः ॥२३॥**

भगवान् शिव भन्नुहुन्छ- अब म शत्रुलाई दुःख दिने सजिलो उपाय बताउँदछु, यसको प्रयोग गर्नाले शत्रुको शरीरभरी खटिरा (विस्फोटक) आउँदछ र यसैका कारण शत्रु मर्दछ ।

**कीटकं भ्रमरं चापि कृष्णं वृश्चिकमेव च ।**
**मूषकस्य शिरो ग्राह्यं मर्कटस्य तथैव च ॥२४॥**
**कृत्वैकत्र समानानि पाषाणे च विचूर्णयेत् ।**
**यमदण्डसमं चूर्णं दुर्निवारं सुरैरपि ॥२५॥**

सर्प, भमरा, कालो बिच्छी, मुसा र बाँदरको टाउको समान मात्रामा लिई पिसेर धुलो बनाउनू । यो धुलो यमराजको दण्ड सरह हुन्छ । यसलाई रोक्न देवताहरू पनि सक्दैनन् ।

**यो जयेच्छत्रुसङ्घाते वस्त्रे शय्यासु यत्नतः ।**
**विस्फोटाः सर्वगात्रेषु जायन्तेऽतिभयावहाः ॥**
**पीडया सप्तरात्रेण म्रियते नात्र संशयः ॥२६॥**

शत्रु संहार गर्न यो धुलोलाई उसका कपडा वा उ सुत्ने ओछ्यानमा लगी हालि दिनू , यसबाट उसको शरीरमा अति भयानक किसिमले विस्फोट रोग निस्कन्छ । यसैको पीडाले उ सात दिन भित्र निश्चय नै मर्दछ ।

खटिरा निको पारिदिने विधि

**नीलोत्पलं सकुमुदं तथा वै रक्तचन्दनम् ।**
**कुक्कुटीदन्तसंयुक्तं पेषयित्वा प्रयत्नतः ॥**
**तदालेपन मात्रेण सद्यः सम्पद्यते सुखम् ॥२७॥**

यस्तो रोग लागेका शत्रुलाई स्वस्थ बनाउनु छ भने कुखुरीको पित्तमा नीलो कमल, रक्तकमल र रक्तचन्दन मिसाएर लेप बनाई उसका शरीरमा दल्न दिनू । उसको रोग शान्त भई सुखी हुन्छ ।



खटिरा निकाली दिने मन्त्र

**ॐ नमो भगवति गृही गहृी वराहो सुभगे ठः ठः स्वाहा ॥**

(यो मन्त्रलाई एक लाख पटक जप गरी पहिला सिद्ध गर्नू र त्यसपछि मात्र प्रयोग गर्नू) ।

कुष्ठरोगी बनाउने विधि

**अथान्यत्सम्प्रवक्ष्यामि कुष्ठीकरणमुत्तमम् ।**
**येन योजितमात्रेण कुष्ठी भवति नान्यथा ॥२८॥**

भगवान् शिव भन्नुहुन्छ- शत्रुलाई कुष्ठरोगी बनाउने उत्तम विधि बताउँदछु यसको प्रयोग मात्रले पनि निश्चय नै उ कुष्ठरोगी हुन्छ ।

**भल्लातकरसं गुञ्जा तथा वै मुण्डुकादिका ।**

**गृहगोधी समायुक्ता खाने पाने च दापयेत्॥**
**सप्ताहात् जायते कुष्ठं तीव्रपीडा समन्वितम्॥२९॥**

भलायोको रस, रातीगेडी, भ्यागुतो आदि र माउसुलीलाई एकै ठाउँमा मिसाई शत्रुले खाने वा पिउने कुरामा हालि दिनाले एक हप्ता भित्र नै उ अत्यन्त पीडादायी कुष्ठरोगी हुनेछ ।

कुष्ठरोग हटाउने विधि

**एतस्य प्रशमं वक्ष्ये यथा मम प्रकाशितम् ।**
**धात्री खदिरनिम्बानि शर्करासहितानि च ॥३०॥**
**विचूर्ण्य मधुसर्पिभ्यां जीर्णान्नेन प्रदापयेत् ।**
**शालिभक्तं पटोलं च तथा शीघ्रं विपाचितम्॥**
**एतेन दत्तमात्रेण नरःसम्पद्यते सुखी ॥३१॥**

अब म यसको शान्ति गर्ने उपाय बताउँदछु । अमला, खयर, नीम र चिनीको धुलोमा घिउ र मह मिसाई पुरानो मार्सीचामलको भातसँग खान दिनू । परबरको तरकारी खुवाउनू । यो खान दिएपछि निश्चय नै कुष्ठरोग शान्त भई शत्रु सुखी हुन्छ ।

झिँगा धपाउने ओखती

**तक्रपिष्टेन तालेन लेपयेत् पुत्रिकाकृतम् ।**
**तामादाय गृहाद्याति मक्षिका नात्र संशयः ॥३२॥**

हरिताललाई तक्रमा पिसी लेप बनाएर एउटा कपडाको पुत्ला (वा सुप्लो) बनाई दलेर घरमा राखे त्यसको गन्ध सुँघी झिँगाहरू निश्चय नै भाग्दछन् । (यसमा मन्त्रका प्रयोग हुँदैन) ।

मुसा भगाउने विधि

**श्वेतार्कदुग्धं कुल्थ्याश्चतिलचूर्णं तथैव च ।**
**अर्कपत्रे तु न्यस्तानि मूषकान्तकराणि वै ॥३३॥**

सेतो आँकको दूध, गहत र तिलको धुलो मिसाएर आँकका पातमा हाली मुसा आउनेजाने स्थानमा राखिदिनाले मुसाहरूको नाश हुन्छ ।

**तालकं छागविण्मूत्रं सपलाण्डुं च पेषयेत् ।**
**आलिप्य मूषकं तेन जीवितं च विसर्जयेत्॥**
**तं दृष्ट्वाऽथ गृहं त्यक्त्वा पलायन्ते हि कौतुकम्॥३४॥**

हरिताल, बोकाको बड्कौँला, बोकाको मूत्र र प्याज मिसाई पिसेर कुनै मुसाका शरीरमा दली छाडिदिनाले उसलाई देखेर अरु सबै मुसाहरू भाग्दछन् ।

**मार्जारस्तु मलं तालं पिष्ट्वा मूषकमालिपेत् ।**
**तमाघ्राय गृहं त्यक्त्वा सद्यो निर्यान्ति मूषकाः॥३५॥**

बिरालोको दिसा र हरिताल मिसाई पिसेर कुनै एउटा मुसाको शरीरमा दलेर छाडि दिने हो भने पनि त्यसलाई सुँघेर सबै मुसाहरू त्यो घर छाडी अन्यत्र जान्छन् ।

उडुस भगाउने उपाय



**अर्कतूलमयी वर्ती भावयेत् यावकेन च ।**
**दीपं तत्कटुतैलेन निःशेषा यान्ति मत्कुणाः॥३६॥**

आँकको कपासबाट कातिएको बत्तीलाई लाहामा भिजाएर सर्सिउँको तेलमा हाली बाल्नाले उडुसको नामोनिसान बाँकी रहँदैन ।

**अर्जुनस्य फलं पुष्पं लाक्षाश्रीवासगुग्गुलम् ।**
**श्वेतापराजिता मूलं भल्लातकविडङ्गकम्॥३७॥**
**धूपःसर्जरसोपेतः प्रदेयो गृहमध्यतः ।**
**सर्पाश्चमत्कुणा मूषागन्धाद्यान्तिदिशोदशम्॥३८॥**

अर्जुन वृक्षको फूल र फल, लाहा, रक्तचन्दन, गोकुलधूप, सेतो अपराजिताको जरा, भलायो र वायुविडङ्ग बराबर मात्रामा मिसाई धूलो पारेर धूप हाल्नाले सर्प, उडुस, मुसा आदि गन्धले गर्दा दश दिशातिर भाग्दछन् ।

### सर्पनिवारण प्रयोग

**गुडश्रीवासभल्लात विडङ्गत्रिफलायुतम् ।**
**लाक्षार्कपुष्पप्रयुक्तश्च धूपोवृश्चिकसर्पहृत् ॥३९॥**

सक्खर, सेतोचन्दन, भलायो, वायुविडङ्ग, त्रिफला, लाहा र आँकको फूल मिसाई धूप बाल्नाले बिच्छी र सर्प भाग्दछन् ।

**मुस्तासिद्धार्थभल्लातकपिकच्छफलंगुडः ।**
**चूर्णभानुफलोपेतं लिहेत्सर्जरसैः समम् ॥४०॥**
**मत्कुणाः मशकास्सर्पाः मूषका विषकीटकाः ।**
**पलायन्ते गृहं त्यक्त्वा यथा युद्धेषु कातराः ॥४१॥**

नागरमोथे , सेतो सर्सिउँ, भलायो, काउसोको फल, सक्खर, आँकको फल र सालधूप बराबर मात्रामा मिसाई धूप बाल्नाले युद्धमा डरछेरुवा मानिस भागेजसरी घरबाट उडुस, लामखुट्टे, सर्प, मुसा र विषालु कीराहरू भाग्दछन् ।



### लामखुट्टे मार्ने उपाय

**भल्लातकविडङ्गानि विश्वकं पुष्पकरं तथा ।**
**जम्बुलो मशकं हन्ति धूपाद्वा गृहमध्यतः ॥४२॥**

भलायोको गेडा, वायुविडङ्ग, सुठो, कमलको गाना र जामुनू (वा फणिर) का बोक्रा बराबर मात्रामा लिई धुलो बनाएर घरको बीचमा सबैतिर पुग्ने गरी धूप हाल्नाले लामखुट्टेहरू मर्दछन् ।

### मुसा आदिबाट खेतबारी जोगाउने विधि

**अथ क्षेत्रस्य सस्यानां सर्वोपद्रवनाशनम् ।**
**बालूकाश्वेतसिद्धार्थान् प्रक्षिपेत् क्षेत्रमध्यतः ॥४३॥**
**सलभाः सर्पकीटाश्च वराहा मृगमूषकाः ।**
**मशकास्तत्र नो यान्ति मन्त्रविद्या प्रभावतः ॥४४॥**

अब जीवजन्तुबाट खेतको बालीनाली जोगाउने उपाय बताउँदछु । बालुवा र सेतो सर्सिउँ मिसाएर खेतबारीमा छर्नाले सलह, सर्प, कीरा, बँदेल, मृग, मुसा, लामखुट्टे आदि मन्त्रका प्रभावले आउँदैनन् ।

### उत्पादन बढाउने विधि

**पूर्वाषाढाख्यऋक्षे तु वन्दाम्बिभीतक वृक्षजाम् ।**
**सस्यमध्ये क्षिपेत्तेन सस्यवृद्धिर्भवेध्रुवम् ॥४५॥**

पूर्वाषाढा नक्षत्रका दिन बरको रूखमा उम्रेको ऐँजेरुलाई काटी बालीको बीचमा लगी गाढ्नाले निश्चय नै अनाज बढ्दछ ।

**ॐ नमः सुरभ्यः बलजः उपरि परिमिलि स्वाहा ॥**

(यो मन्त्र दश हजार पटक जप गर्नाले सिद्ध हुन्छ) ।

### स्त्रीको रगत बहन बन्द गराउने विधि



**शैलुषत्वचा मिश्रिततण्डुलानां विधाय पिष्टं विनियोजनीयम् ।**
**कन्दर्पगेहे मृगलोचनायां रक्तं निहन्त्याशु हठेन योगः ॥४६॥**

लप्सीका बोक्रा र (सठिया) चामल पिसेर पोको पारी स्त्रीका जननेन्द्रियमा राख्नाले रगत बहन बन्द हुन्छ ।

**धात्री च पथ्या च रसाञ्जनं च कृत्वा विचूर्णं सजलं निपीतम् ।**
**अत्यन्तरक्तोत्थितमुग्रवेगं निवारयेत्सेतुमिवान्बपूरम् ॥४७॥**

अमला, हर्रो र रसाञ्जन मिसाएर बनाइएको धुलो पानीसँग खानाले स्त्रीको अत्यन्त वेगिलो रगत बहने रोग पनि बाँधले पानी रोकिए जसरी नै रोकिने गर्दछ ।

**मूलं तु शरपुङ्खाया पेषयेत्तण्डुलोदकैः ।**
**पिबेत्कर्षमात्रं तु बहुरक्तप्रशान्तये ॥४८॥**

रातो साकिनुको जरालाई चौलानी पानीमा पिसेर करिब बाह्र ग्राम खाने गर्नाले स्त्रीको बेगिलो रक्तप्रदर रोग शान्त हुन्छ ।

दार्वीरसाञ्जनवृषार्द्धकिरातबिल्व
भल्लातकैरथकृतोमधुनाकषायः ।
पीतो जयत्यतिबलं प्रदरं सशूलं
पीतं सितारुणविलोहितनीलकृष्णम् ॥४९॥

चुत्रो, रसाञ्जन, वृषार्द्ध (?), चिराइतो, बेल र भलायो मिसाई पकाइएको काँढापानी महसँग खानाले अति बलियो शूल सहितको पहेँलो, सेतो, अरुण, रातो, नीलो र कालो प्रदर रोग पनि निको हुन्छ ।

वन्ध्या नाशक प्रयोग

समूलमत्रां सर्पाक्षीं रविवारे समुद्धरेत् ।
एकवर्णगवांक्षीरे कन्याहस्तेन पेषयेत् ॥५०॥
ऋतुकाले पिबेद्वन्ध्या बलार्द्धं तद्दिने दिने ।

क्षीरशाल्यन्नमुद्गं च लघ्वाहार प्रदापयेत् ॥
एवं सप्तदिनं कुर्यात् वन्ध्या भवति गर्भिणी ॥५१॥

आइतबार सर्पको काफल (सर्पाक्षी) को जरा लेराई एउटै रङ भएकी गाईको दूधमा कन्याका हातबाट पिस्न लगाई ऋतुकालमा पिउनाले र ओखती खाने अवधिमा दूध, मार्सीचामलको भात र मुगीको दाल जस्ता पथ्य कुरा खानाले सात दिनमा बन्ध्यादोष नाश हुन्छ ।

उद्वेगं भयशोकौ च दिवानिद्रां विवर्जयेत् ।
न कर्म कारयेत् किञ्चित् वर्जयेच्छीतमातपौ ॥५२॥
न तथा परमां सेवां कारयेत् पूर्ववत् क्रियाम् ।
पतिसङ्गाद्गर्भलाभो नात्र कार्य्या विचारण ॥५३॥

ओखती खाने अवधिमा स्त्रीले कुनै किसिमको उत्तेजना, डर, शोक नगर्नू । दिउस नसुत्नू । धेरै तातो वा चिसोबाट बच्नू । पहिला जस्तो काम (सेवा) नगर्नू । यसरी पतिसँग ग्राम्यधर्ममा संलग्न हुने बन्ध्या स्त्री अवश्य गर्धवती हुन्छे, दशतिर मन डुलाउन पर्दैन ।

**मुस्तां प्रियङ्गुं सौवीरं लाक्षाक्षौद्रं समं पिबेत् ।**
**कर्षं तण्डुलतोयेन वन्ध्या भवति पुत्रिणी ॥**
**पथ्यमुक्तं यथा पूर्वन्तद्वत् सप्तदिनं पिबेत् ॥५४॥**

माथिकै विधिले नागरमोथे, दहीगुयैंलो, बयर, लाहा र मह बराबर मात्रामा लिई (पुरानो) चामलको चौलानीसँय दिनहुँ एक कर्ष खानाले सात दिन भित्र वन्ध्या स्त्रीलाई पतिको संससर्गबाट गर्भ रहन्छ ।

**सपिप्पली केशर शृङ्गवेर क्षुद्रोषणं गन्धघृतेन पीतम् ।**
**वन्ध्यापि पुत्रं लभते हठेन, योगस्तु सोऽयं विधिना मयोक्तः ॥५५॥**

पिप्ला, नागकेशर, अदुवा, क्षुद्र (कनिका ?), मरिच (उषण), गन्ध (?) घिउसँग खानाले वन्ध्या स्त्री पनि पुत्रवती हुन्छे । यो योगको विधि मैले बताएँ ।

**मूलं शिफा वा किल लक्ष्मणाया ऋतौ निपीय त्रिदिनं पयोभिः ।**
**क्षीरान्नचर्या नियमेन भुङ्क्ते पुत्रं प्रसूते वनिताविचित्रम् ॥५६॥**

बरको हाँगाको जरा (शिफा ?) वा सेतो कण्टकारीको जरा लेराई ऋतुकालका तीन दिनसम्म दूधसँग पिसेर खानाले तथा यी दिनमा दुध र अन्न (भात) मात्र खाने गरेमा वन्ध्या स्त्रीले पनि अचम्मसँग सन्तान जन्माउँदछे ।

**तुरङ्गगन्धाघृतवारिसिद्धमाज्यं पयः स्नानदिने च पीत्वा ।**
**प्राप्नोति गर्भं नियमं चरन्ति वन्ध्या च नूनं पुरुषप्रसङ्गात् ॥५७॥**

अश्वगन्धालाई पानीमा पकाएर घिउमा भुट्नू अनि दूध र घिउ मिसाएर रजस्वला भएको चौथो दिन खानू । यसरी ओखती खाई नियममा बस्ने वन्ध्या स्त्रीले पतिको संसर्गबाट अवश्य सन्तान जन्माउँदछिन् ।

**कृष्णापराजिता मूलं वत्सक्षीरेण सम्पिबेत् ।**
**ऋतुस्नाता त्रिघस्रं तु वन्ध्यागर्भधराभवेत् ॥५८॥**

रजस्वला भएको चौथो दिन नुहाएर शुद्ध भएकी स्त्रीले कालो अपराजिताको जरा लेराई बाच्छाबाच्छी भएकी पहिलो बेते गाईको दूधसँग मिसाएर तीन दिनसम्म खानाले वन्ध्या स्त्री पनि पतिको संसर्गबाट गर्भवती हुन्छे ।

**नागकेशरकं चूर्णं नूतनाद्रव्यदुग्धतः ।**
**पिबेत्सप्तदिनं दुग्धं घृतैर्भोजनमाचरेत् ॥**
**तदृतौ लभते गर्भं सा नारी पतिसङ्गता ॥५९॥**

नागकेशरलाई (पहिलो बेते र बाच्छाबाच्छी जिउँदै भएकी लैनू गाईको) ताजा दूधसँग खाई सो अवधिमा दूध र भात मात्र खाने वन्ध्या स्त्रीले पतिको संसर्गबाट गर्भधारण गर्दछे ।

**तिलरसगुडश्चैवं गोपुरीषाग्नियोगात्तरुणवृषभमूत्रंप्रस्थयुक्तं विपक्वम् ।**
**ऋतुदिवस तु मध्ये सप्तवारं च पीतं जनयति सुतमेतन्निश्चितं पुष्पितैव ॥६०॥**

तिल, रस (पारो ?), सक्खर र तरुनो साँढेको मूत्र एक प्रस्थ एउटा भाँडामा हाली गाईको गुइँठा बालेर पकाउनू , पाकेपछि यसलाई ऋतुकालमा सात पटक पिउनाले अवश्य नै वन्ध्या स्त्री पतिको संसर्गबाट सन्तानवती हुन्छे ।



**कदम्बपत्रं श्वेतं च वृहतीमूलमेव च ।**
**एतानि समभागानि ह्यजाक्षीरेण पेषयेत् ॥६१॥**
**त्रिरात्रं पञ्चरात्रं वा पिबेदेतन्महौषधम् ।**
**निपीयमाने तु सदा गर्भो भवति निश्चितम् ॥६२॥**

कदमका पात, सेतोचन्दन र बिहीँको जरा बराबर मात्रामा लिई बाख्रीको दूधमा पिसेर ऋतुकालका तीन वा पाँच रातसम्म पिउनाले वन्ध्या स्त्री पनि पतिको संसर्गबाट निश्चय नै गर्भवती हुन्छे ।

**विष्णुक्रान्तासमूलं तु पिष्ट्वा दुग्धेषु माहिषैः ।**
**महिषीनवनीतेन ऋतुकाले तु भक्षाये ॥६३॥**
**एवं सप्तदिनं कुर्यात् पथ्यभुक्तं च पूर्ववत् ।**
**गर्भं सा लभते नारी काकवन्ध्या सुशोभनम् ॥६४॥**

जरैसहितको विष्णुक्रान्तालाई भैंसीको दूधमा पिसेर भैंसीकै नौनीसँग ऋतुकालमा खानू । सात दिनसम्म यो ओखती खाएर पहिले बताएभैँ पथ्य खानपिन गर्ने नारीले कागजस्तै एक पटक मात्र बच्चा पाउने भएपनि पुनः गर्भधारण गर्दछे ।

**गर्भे सञ्जातमात्रे तु पश्चान्मासाच्चवत्सरात् ।**
**म्रियते द्वित्रिवर्षाया यस्याः सामृतवत्सका ॥६५॥**
**प्राङ्मुखा कृत्तिकर्क्षे तु बन्ध्यां कर्कोटकीं हरेत् ।**
**तत् कन्दं पेषयेत्तोयैः कर्षमात्रं सदा पिबेत् ।**
**ऋतुकाले तु सप्ताहं दीर्घजीवी सुतो भवेत् ॥६६॥**

जसको गर्भ जन्मनासाथ वा महिना दिनपछि वा वर्ष दिनपछि वा दुईतीन वर्षमा मर्ने गर्दछ त्यस्ता स्त्रीलाई मृतवत्सा भनिन्छ । कृत्तिका नक्षत्र परेको आइतबार बाँझी नारीले जरै समेतको चठेललाई लेराई त्यसको जरालाई दूधमा पिसी ऋतुकालमा सात दिनसम्म एक एक कर्ष प्रतिदिनका दरले खानाले उक्त स्त्रीको दीर्घजीवी सन्तान हुन्छ ।



**या बीजपूरद्रुममूलमेकं, क्षीरेणसिद्धं हविषाविमिश्रम् ।**
**ऋतो तु पीत्वा स्वपतिं प्रयाति, दीर्घायुषं सा तनयं प्रसूते ॥६७॥**

बिमिरोको जरा एउटा लेराई दूधमा पिसेर (पकाएर) घिउ मिसाई गर्भ नबस्ने स्त्रीले खाई पतिसँग ग्राम्यधर्ममा संलग्न भएमा लामो आयु भएको सन्तान जन्माउने छिन् ।

### गर्भस्तम्भन

**अकस्मात् प्रथमे मासे गर्भे भवति वेदना ।**
**गोक्षीरैः पेषयेत्तुल्यं पद्मकोशीरचन्दनम् ॥६८॥**
**पलमात्रं पिबेन्नरी त्र्यहाद् गर्भः स्थिरो भवेत् ।**
**अथवा मधुकं दारु शाकवृक्षस्य बीजकम् ॥**
**सम्पिष्य क्षीरकाकोलीं पिबेत्क्षीरैस्तु गोभवैः ॥६९॥**

गर्भवती भएको पहिलो महिनामै पेट दुखेर गर्भ खस्ला जस्तो हुन थालेमा पैयुँ, खसखस र रक्तचन्दन बराबर मात्रामा लिई गाईको दूधमा पिसेर एक एक पलका दरले तीन दिनसम्म खुवाउनू, गर्भ स्थिर

हुन्छ । अथवा जेठीमधु, देवदार र शिरीषका गेडा, दूधे कल्छेलहरोको रसमा पिसी गाईको दूधसँग पिउन दिनू, गर्भ रोकिन्छ ।

**नीलोत्पलं मृणालं च यष्टिं कर्कटश्रृङ्गिकौ ।**
**गोक्षीरैस्तु द्वितीये च पित्वा शाम्यति वेदना ॥७०॥**

नीलकमलको डाँठ (वा नीलकमल र कमलको डाँठ), जेठीमधु र कर्कटश्रृङ्गी बराबर मात्रामा लिई गाईको दूधमा पिसेरपिउन दिनाले दोश्रो महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**अथवाश्वत्थवल्कं च तिलं कृष्णं शतावरीम् ।**
**मञ्जिष्ठासहितं पिष्ट्वा विपेत्क्षीरैश्चतुर्गुणैः ॥७१॥**

अथवा पिप्पलको बोक्रा, कालो तिल र कुरिलो बराबर मात्रामा लिई मजिठो समेत मिसाएर गाईको दूधमा पिसी खुवाउनाले पनि दोश्रो महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**श्रीखण्डं तगरं कुष्ठं मृणालं पद्मकेशरम् ।**

**पिबेच्छीतोदकैः पिष्टं तृतीये वेदनावति ॥**
**अथवा क्षीरकाकोली बलां पिष्ट्वा पयः पिबेत् ॥७२॥**

श्रीखण्ड, तगर, कूट, कमलको डाँठ र कमलकेशर शीतल पानीमा पिसेर खान दिनाले अथवा दूधे कल्छेलहरो र बलु लाई दूधमा पिसेर खुवाउनाले तेश्रो महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**नीलोत्पलं मृणालानि गोक्षुरं नागकेसरम् ।**
**तुर्य्यमासे गवां क्षीरैः पिबेच्छाम्यति वेदना ॥७३॥**

नीलकमल, कमलको डाँठ, गोखुर र नागकेसर मिसाई गाईको दूधसँग खुवाउनाले चौथो महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**पुनर्नवाथ काकोली तगरं नीमुत्पलम् ।**
**गोक्षुरं पञ्चमे मासे गर्भक्लेशहरं पिबेत् ॥७४॥**

पुनर्नवा, कल्छेलहरो, तगर, नीलकमल र गोखुर मिसाएर खान दिनाले पाँचौं महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**सितां कपित्थमज्जां च शीततोयेन पेषयेत् ।**
**षष्ठे मासि गवां क्षीरैः पिबेत् क्लेशनिवृत्तये ॥७५॥**

चिसो पानीमा कैथको गुदी र मिस्री घोली गाईको दूधसँग पिउनाले छैटौं महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**कशेरुं पौष्करं मूलं श्रृङ्गाटं नीलमुत्पलम् ।**
**पिष्ट्वा च सप्तमे मासि क्षीरैः पीत्वा प्रशाम्यति ॥७६॥**

कसुर, पुष्करमू, सिँगडा र नीलकमल मिसाई पिसेर दूधसँग पिउनाले सातौं महिनामा हुने गर्भ-वेदना समाप्त हुन्छ ।



**यष्टिं पद्माक्षमुस्तं च केशरं गजपिप्पलीम् ।**
**नीलोत्पलं गवां क्षीरैः पिबेदष्टममासिके ॥७७॥**

जेठीमधु, कमलगट्टा, मोथे, नागकेसर, गजपिप्ला र नीलकमल मिसाएर पिसी गाईको दूधसँग पिउनाले आठौं महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**विशाल(ला)बीजकं कोलं मधुना सह पेषयेत् ।**
**वेदना नवमे मासि शान्तिमाप्नोति नान्यथा ॥७८॥**

ऐरेलुका बीज र चाभो (?) महसँग मिसाएर खानाले नवौं महिनामा हुने गर्भ-वेदना निश्चय नै शान्त हुन्छ ।

**शर्करा गोस्तनी द्राक्षा सक्षौद्रं नीलमुत्पलम् ।**

**पाययेद्दशमे मासि गवां क्षीरैः प्रशान्तये ॥७९॥**

मिस्री, मुनक्का, दाख, मह र नीलकमल मिसाएर गाईको दूधसँग पिउनाले दशौं महिनामा हुने गर्भ-वेदना शान्त हुन्छ ।

**अथवा शुण्ठिसंसिद्धं गोक्षीरं दशमे पिबेत् ।**
**अथवा यष्टिमन्दारशुण्ठीक्षीरेण सम्पिबेत् ॥८०॥**

अथवा सुठो हालेर सिद्ध पारिएको गाईको दूध अथवा जेठीमधु, देवदार र सुठोसँग दूध पिउनाले पनि दशौं महिनाको गर्भ-पीडा शान्त हुन्छ ।

**धात्र्यञ्जनं सावरयष्टिकाख्यं क्षीरं निपीतं प्रमदा हठेन ।**
**सप्ताह मात्रं विनियोज्य नारी स्तम्भानि गर्भं चलितं न चित्रम् ॥८१॥**

अमला, रसाञ्जन, लोध र जेठीमधु मिसाएर एक हप्तासम्म दूधसँग पिउनाले गर्भलाई बलपूर्वक रोकिन्छ, (तुहिँदैन) र पुनः चल्न थाल्दछ ।



**कुलाल हस्ताद्धवकर्दमस्य मेषीपयः क्षौद्रयुतस्य मात्रम् ।**
**गर्भच्युतिं शूलमथो निवार्य करोति गर्भं प्रकृतं हठेन ॥८२॥**

कुम्हालेले भाँडो बनाउँदा हातमा लागेको माटोलाई भेडीको दूधमा मिसाएर महसँग खानाले गर्भले गर्ने पीडा शान्त हुन्छ र गर्भ धेरै चल्दैन ।

**कशेरुश्रृङ्गाटकजीरकाणि पयोघनैरण्डशतावरीभिः ।**
**सिद्धं पयश्शर्करया विमिश्रं संस्थापयेद् गर्भमुदीर्य शूलम् ॥८३॥**

कसुर, सिँगडा, जीरा, नागरमोथे, अँडिरको बीज र कुरिलो मिसाएर त्यसलाई दूध र मिस्रीसँग खान दिनाले गर्भले दिने पीडा नाश हुन्छ र गर्भ पनि स्थिर हुन्छ ।

**कन्दं कौमुपकस्य माक्षिकयुतं क्षीराज्यमिश्रं पिबेत्**

सप्ताहं सितया सुपक्वमबला शीतीकृतं वायुना ।
गर्भस्रावमरोचकं स पवनं शोफं त्रिदोषं वमिं
शूलं सर्वविधं निहन्ति नियमादेवं च यत्तत्स्मृतम् ॥८४॥

कौमुपक (कोई ?) को जरा, मह र घिउलाई दूधमा हालेर पकाई हावाले सेलाएपछि सात दिनसम्म खुवाउनाले गर्भस्राव, अरुचि, सुजन, त्रिदोष, वाकवाकी र सबै प्रकारका शूल नाश हुन्छ ।

कुबलयं सतिलं पीत्वा क्षीरेण मधुसिता युतम् ।
गुरुतरदोषैश्चलितं गर्भं संस्थापयेदाशु ॥८५॥

कमलको जरा (कुबलय ?, नीलकमल) र तिललाई दूध, मह र मिस्री मिसाएर खानाले खस्न लागेको गर्भ पनि रोकिन्छ ।

ह्रीबेरातिविषा मुस्ता मारिचं संश्रृतं जलम् ।
दद्याद्गर्भे प्रचलिते प्रदरे कुक्षिशूलके ॥८६॥



गर्भ बढी हल्लिए, प्रदर रोग भए वा कोखा दुखे सुगन्धवाल, अतीस, नागरमोथे र मरिच हाली पकाइएको काँढापानी पकाएर पिउन दिनू ।

गोक्षीरं शर्करायुक्तं शुष्कगर्भप्रशान्तये ।
पिबेद्वा मधुकं चूर्णं गम्भारीफलचूर्णकम् ॥
समांसं गव्यदुग्धेन गुर्विण्या व्याधिशान्तये ॥८७॥

गाईको दूधमा मिस्री मिसाई पिउन दिएमा गर्भ सुक्न बन्द हुन्छ । गर्भिणीका रोग शान्त पार्न जेठीमधुको धुलो, खमारी फलको धुलो, मासु र गाईको दूध खान दिनू ।

सुत्केरी गराउने ओखती

श्वेतं पुनर्नवामूलं चूर्णं योनौ प्रवेशयेत् ।
क्षणात् प्रसूयते नारी गर्भेणातिप्रपीडिता ॥८८॥

बच्चा जन्मने बेलामा धेरै बेथा लागेर पनि बच्चा जन्मन कठिनाई भए सेतो पुनर्नवाको जराको धुलो जननेन्द्रियमा हालि दिनू । सुखसँग बालक जन्मन्छ ।

**दशमूलीश्रृतं तोयं घृतसैन्धवसंयुतम् ।**
**शूलातुरापिबेन्नारी सा सुखेन प्रसूयते ॥८९॥**

दशमूलको काँढापानीमा सिँधेनुन र घिउ मिसाएर पिउन दिनाले पनि सुखपूर्वक सुत्केरी हुन्छे ।

**ॐ मन्मथः ॐ मन्मथः ॐ मन्मथः मन्मथ वाहिनी लम्बोदर मुञ्च मुञ्च स्वाहा ।**
**अनेन मन्त्रेण जलं सुतप्तं पातुं प्रदेयं शुचिता नरेण ।**
**तोयाभिपानात्खलु गर्भवत्या प्रसूयते शीघ्रतरं सुखेन ॥९०॥**

पुरुषले आफू शुद्ध भई माथिको मन्त्रले मन्त्री राम्ररी पकाइएको तातोपानी सुत्केरी व्यथा लागेकी स्त्रीलाई पिउन दिनू । यो पानी पिएपछि निश्चय नै गर्भवती चाँडै सुखपूर्वक सुत्केरी हुन्छे ।

**लाङ्गलीकन्दचूर्णं वा मूलं वाऽपामार्गजम् ।**
**इन्द्रवारुणिकामूलं योनित्थं पुष्पबन्धनुत् ॥९१॥**

कलिहारी नामक विषालु बुटीको कन्दको धुलो, दतिवनको जराको धुलो वा ऐरेलुको जराको धुलो मिसाएर पोको पारी स्त्रीको जननेन्द्रियमा राख्नाले बन्द भएको मासिक धर्म खुल्दछ ।

**तिलमूलं कषायन्तु ब्रह्मदण्डीयमूलकम् ।**
**यष्टी त्रिकटुकं चूर्णं क्वाथयुक्तं च पाचयेत् ॥**
**पुष्परोधे रक्तगुल्मे स्त्रीणां सद्यः प्रणस्यति ॥९२॥**

तिलको जराको काँढापानीमा ब्रह्मदण्डीको जरा, जेठीमधु र त्रिकटु मिसाएर पुनः काँढापानी पकाएर खानाले बन्द भएको मासिक धर्म खुल्दछ र स्त्रीको रक्तगुल्म रोग पनि ठिक हुन्छ ।

**ज्योतिष्मतौ कोमलपत्रमग्नौ भ्राष्टं जपायाः कुसुमं च पिष्टम् ।**
**गृहाम्बुना पीतमिदं युवत्या करोति पुष्पं स्मरमन्दिरस्य ॥९३॥**

मालकागुनुको कमला पातलाई आगोमा भुटी जपाकुसुमको फूलसँग मिसाएर पिसी पानीसँग खानाले मासिक धर्म खुल्दछ ।

एतत्ते कथितं वत्स तन्त्रमुड्डीशमुत्तमम् ।
यस्मै तस्मै न दातव्यं रक्षणीय प्रयत्नतः ॥९४॥

हे रावण ! मैले बताएको यो उड्डीशतन्त्र जो पायो त्यसलाई नपढाउनू, प्रयत्नपूर्वक रक्षा गर्नू ।

इति उड्डीशतन्त्रे रावण-शिवसम्वादे भूत करणबन्ध्यात्वनिवारणादि कथनं नाम दशमः पटलः ॥१०॥
॥ उड्डीशतन्त्र समाप्तम् ॥